# लिम्बु साहित्य निर्माणको इतिहास

अमर तुम्याहाङ्



प्रकाशक

**याक्थुङ साप्सक अकादमी**

**शङ्खमूल, काठमाडौं**




प्रकाशन सहयोगी

**आदिवासी जनजाति उत्थान**

**राष्ट्रिय प्रष्तिठान**

**नेपाल सरकार**

**जावलाखेल, ललितपुर**

# लिम्बु साहित्य निर्माणको इतिहास


| | | |
|---|---|---|
| सर्वाधिकार | : | लेखकमा |
| संस्करण | : | प्रथम (२०६९) (सन् २०१३) |
| प्रकाशक | : | याक्थुङ् साप्सक् अकादमी |
| प्रकाशन सहयोगी | : | **आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रष्ठिठान, नेपाल सरकार, जावलाखेल, ललितपुर** |
| आवरण/सज्जा | : | CreativeWork. NEPAL, काठमाडौँ |
| मुद्रण | : | महालक्ष्मी अफ्सेट प्रेस, बिजुली बजार, बानेश्वर |
| मूल्य | : | रू. २०१।– |
| ISBN | : | 978-9937-2-6482-2 |

# किराँती-याक्थुङ् पाःन् तथा साहित्य दर्पण

नेपालको राजनैतिक सिमानाभित्र बोलिने बहु(ल) भाषाहरू र तिनको साहित्य नेपालमा आदि(मूल)वासी अध्ययन (Indigenous Studies) को एक महत्त्वपूर्ण विषयवस्तु हो । किराँती-याक्थुङ् पाःन् (लिम्बू भाषा) तथा यसको साहित्य त्यो अध्ययनको एक अपरिहार्य पाटो हो । सङ्घीय गणतन्त्र नेपालको समावेशी शैक्षिक तथा बौद्धिक उन्नयनको लागि राष्ट्रिय-स्तरको शैक्षिक केन्द्र आदिवासी अध्ययन विश्वविद्यालय (National University of Indigenous Studies) स्थापना गर्न अति आवश्यक छ । यस विश्वविद्यालयको आधारशिला भनेको किराँती-याक्थुङ् पाःन् तथा यसको साहित्य पनि एक हो ।

सोही आधारशिलाको रूपमा युवा प्राज्ञ तथा विद्वान्-लेखक अमर तुम्याहाङ् *लिम्बू साहित्य निर्माणको इतिहास* (ई. २०१३) लिएर आउनु नेसनल युनिभर्सिटी अव् इन्डिजिनिअस स्टडिजको सपना देख्नेहरूका लागि मात्र नभएर आफ्नो जातीय, भाषिक तथा सांस्कृतिक पहिचानमा गौरव गर्ने तथा सामान्य पाठक साथै नेपाली साहित्यको भन्डार भर्दै नेपाली साहित्यलाई विश्वसामु परिचित गराउन चाहना राख्नेहरूका लागि यो कृति सहायकसिद्ध पनि हुनेछ ।

ई. २००० पछिको समयमा अमर र मेरो सघन चिनापर्ची *इन्डो-नेपाल किराँती भाषाहरू: विगत, समकालीन परिवेश र भोलिका चुनौतीहरू* (ई. २००८) को प्रकाशनसँगै भएको हो । त्यस कृतिमा हामी तीन (डा. लाल-श्याँकारेलु रापचा, अमर तुम्याहाङ् र वाग-आयाग्यामी यालुङ्छा) जनाको

संलग्नता रहेको थियो । केही हरफ लिखित साहित्य तथा अध्ययन भएका कुल २७ किराँती भाषाहरूको स्थितिको सर्वेक्षण कार्य सो कृतिले गरेको छ । यस सर्वेक्षण अध्ययनले ओल्लो (प्रस्तावित कोइँचवान), माझ (प्रतावित खम्बुवान) र पल्लो (प्रतावित लिम्बुवान) गरी तीनै किराँत क्षेत्रको भाषा-साहित्यमा तुलनात्मकरूपमा सबैभन्दा बढी विकसित किराँती भाषाहरूमध्ये किराँती-याक्थुङ् नै भएको निष्कर्ष निकालेको छ– स्पृश्य प्रमाणसहित । किराँतविज्ञान अध्ययन संस्थान (रिक) ले प्रकाशनमा ल्याएको जम्मा ६४०+द पृष्ठको कृतिमा पाना ४२९-४७७ मा किराँती-याक्थुङ् पाःन् तथा साहित्यलाई स्थान दिएको छ । किराँती-याक्थुङ्इतर अध्येताले ओल्लो तथा माझ किराँत क्षेत्रबाट उठाएको सायद यो नै पहिलो संयुक्त कदम हुनु पर्दछ ।

संयुक्तरूपमा किराँती-याक्थुङ् पाःन्, साहित्य तथा स्रष्टालाई चिनाउने त्यो प्रयासपछि युवा स्रष्टा तथा अध्येता तुम्याहाङ्को *लिम्बू साहित्य निर्माणको इतिहास* (ई. २०१३) कृति किराँती-याक्थुङ् पाःन्को उन्नयनको लागि गरिएका र भएका सिङ्गो खोज हो । तर यस क्षेत्रमा अन्वेषक तुम्याहाङ् भने एक्ला होइनन् । उनी समकालीन परिवेशका केही दर्जन याक्थुङ स्रष्टा तथा अन्वेषकमध्येका एक हुन् ।

फाल्गुनन्द लिङ्देनपछि इमानसिंह चेम्जोङ्को जमानामै *किराँत साहित्यको इतिहास* (ई. १९५६) प्रकाशनमा आयो । धेरै लामो समयको अन्तराल र परिवर्तन कालपछि विरही काइँलाले *लिम्बू भाषा र साहित्यको सङ्क्षिप्त परिचय* (सं. २०४९) प्रकाशनमा ल्याए । पुष्प थाम्सुहाङको लिम्बू भाषाः साहित्यिक स्रष्टा र दृष्टिकोण (सं. २०६१) पनि उपलब्ध छ । उनै थाम्सुहाङको *लिम्बू काव्यको प्रवृत्तिगत समालोचना* पनि नेपाल प्रज्ञा प्रतिष्ठानबाट निस्कने क्रममा छ । हालसम्म किराँती-याक्थुङ् पाःन्मा सृजनात्मक लेखन गर्ने स्रष्टाहरु झण्डै ५ सयको हाराहारीमा पुगिसकेका छन् ।

लेखक तुम्याहाङ्को यस कृतिमा पनि ती स्रष्टा र सृजनाहरूको ऐतिहासिक स्मरण गर्ने कार्य भएको नै छ । त्यस अर्थमा यो कृति किराँती-याक्थुङ्

पाःन् र साहित्यको दपर्ण हो– ऐतिहासिक कालखण्ड र प्रवृत्तिसहित । त्यसैले किराँती-याक्थुङ् पाःन् र साहित्यमा चासो लिने जो कोहीलाई पनि यो कृति छुटाउनै नहुने सन्दर्भ पुस्तक हो । यस मानेमा अमर सदैव अमर रहने छन्– यो कृतिसँगै । लिम्बुवान पनि अमर रहोस् अमरको कृति जसरी नै । यही आधारशिला टेक्तै हामी भोलि नेसनल युनिभर्सिटी अव् इन्डिजिनिअस स्टडिजको कक्षा-कोठामा वौद्धिक वहसमा व्यस्त रहन सकूँ भन्ने कामना सहित ।

हाम्रो सपना साकार होस् । युमा र इँगी याब्रेसँग यही प्रार्थना गर्दछु ।

**डा.लाल-श्याँकारेलु रापचा**
प्रमुख,
प्राज्ञिक तथा अनुसन्धान महाशाखा
आजउरा प्रतिष्ठान
जावलाखेल, ललितपुर

सालिवा श्याँदर
११ जेठ २०७०, शनिबार

## समर्पण

मेरी ममतामयी आमा छमीमाया माबक्खिम्

साथै

लिम्बु भाषा-साहित्यका निम्ति जीवन उत्सर्ग

एवम्

समर्पण गर्ने

ज्ञात अज्ञात सपुतहरूप्रति

# कृतज्ञता

यो '**लिम्बु साहित्य निर्माणको इतिहास**' पुस्तक लेख्न प्रोत्साहित एवम् उत्प्रेरित गर्ने श्रद्धेय प्राज्ञ सुलोचना मानन्धर, प्राज्ञिक दिशानिर्देश गर्ने नेपाल प्रज्ञा-प्रतिष्ठानका कुलपति वैरागी काइँला, विषयवस्तु प्रस्तुतीमा अमूल्य सुझाव दिई सहयोग गर्नुभएका डा. चैतन्य सुब्बाका साथै यस पुस्तकका सम्बन्धमा अभिमत लेखिदिनु हुने डा. लाल-श्याँकारेलु रापचाप्रति प्रातकृतज्ञता व्यक्त गर्दछु ।

यस पुस्तकको तयारी गर्ने क्रममा प्रयोग भएका अनेकौँ कृतिहरूका सर्जक एवम् शोधकर्ताहरूप्रति पनि उतिकै कृतज्ञ छु । यसरी नै यो पुस्तक प्रकाशनका लागि आर्थिक (आंशिक) सहयोग गर्ने संस्था **आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रष्तिठान** तथा प्रकाशक संस्था **याक्थुङ् साप्सक् अकादमी**प्रति पनि आभार व्यक्त गर्दछु ।

- लेखक

यक्वा तङ्नाम् (उभौली पर्व) तथा २५५७ औँ बुद्ध जयन्ती
वि.सं. २०७०   जेठ ११ गते शनिबार
25 May 2013

# विषय सूची

अध्याय-१



अध्याय-२

अध्याय - ३



अध्याय-४

अध्याय-५

अध्याय-१

# लिम्बु जाति, भाषा र साहित्यको सन्दर्भ

**१.१ आरम्भ**

नेपाल भौगोलिक रूपले विश्व मानचित्रमा सानो छ । यसो भए पनि यहाँ रहेका जाति तथा भाषाको आधारमा यो विशाल छ । त्यसैले नेपालको अन्तरिम संविधान-२०६३ को धारा ३ मा **बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसांस्कृतिक विशेषतायुक्त, समान आकाङ्क्षा र नेपालको राष्ट्रिय स्वतन्त्रता, अखण्डता, राष्ट्रिय हित तथा समृद्धिप्रति आस्थावान् रही एकताको सूत्रमा आबद्ध सबै नेपाली जनता समष्टि रूपमा राष्ट्र हो** भनी राष्ट्रको परिभाषा गर्दा जाति र भाषालाई विशेष प्राथमिकतापूर्वक राखिएको हो । मूलरूपमा मङ्गोल, आर्य, द्रविड, एस्ट्रोएसियाटिक अर्थात् आग्नेयाली जातिहरूको बसोबास रहेको छ । डा. माधवप्रसाद पोखरेले नेपालमा (क) कुसुन्डा परिवार (ख) द्रविड परिवार (ग) आग्नेय परिवार (घ) भोटवर्मेली परिवार र (ङ) भारोपेली परिवारसहित पाँच महापरिवारका भाषा बोलिने (नेपालका भाषाहरूको वर्तमान अवस्था, २०६४) उल्लेख गरेका छन् । भाषा परिवार वक्ताका आधारमा भन्ने हो भने आर्य जातिहरूले बोल्ने भारोपेली भाषा परिवारका वक्ता सङ्ख्या सबैभन्दा ठुलो रहेको छ । यसो हुनुमा यस भाषाभित्रको पनि विशेष गरी खसकुरा या खसभाषा (नेपाली भाषा) ले राज्यको विशेष संरक्षण पाउनु प्रमुख कारण हो । यसरी नै दोस्रो ठूलो भाषा परिवारको रूपमा मङ्गोल मूलका जातिहरूले बोल्ने भोटवर्मेली भाषा पर्दर्यछ । यसपछि क्रमशः आग्नेय, द्रविड र कुसुन्डा भाषाका वक्ताहरूको क्रम आउँछ ।

भोट वर्मेली भाषा परिवारमा पनि किरात समुदायको निकै ठुलो सङ्ख्या रहेको छ । किरात भाषा परिवारको वक्ताहरूको बसोबासका आधारमा तीन भागमा बाँडिएको पाइन्छ । यसलाई क्षेत्रको आधारमा पश्चिमी,

केन्द्रीय र पूर्वीय किरात भाषा समूहहरूका रूपमा विभाजन गरी हेरेको पाइन्छ । किरात जातिले नेपाल खाल्डोमा इतिहासका लामो कलखण्डसम्म राज्य गरे पनि पछिल्लो समयमा काठमाडौँ पूर्वदेखि टिस्टासम्मको भूभागलाई आफ्नो थातथलो बनाइ बसोबास गरेको पाइन्छ । यही बृहत् किरात क्षेत्रलाई परम्परागत रूपमा ओल्लो किरात, माझ किरात र पल्लो किरात क्षेत्रमा विभाजन गर्ने चलन रहेको थियो । ओल्लो किरात क्षेत्रमा बसोबास गर्ने किरात जातिहरू हायु, कोइँच, वाम्बुले, जेरो, थुलुङ्, खालिङ्, दुमी आदिले बोल्ने किरात भाषाहरू पश्चिीमी किरात भाषा समूहअन्तर्गत पर्दछन् । यसरी नै माझ किरात क्षेत्रमा बसोबास गर्ने किरात जातिहरू कुलुङ्, साङ्पाङ्, बान्तावा, चाम्लिङ्, दुङ्माली, कोयु आदिले बोल्ने किरात भाषाहरू केन्द्रीय किरात भाषा समूहअन्तर्गत पर्दछन् । पल्लो किरात क्षेत्रमा बसोबास गर्ने किरातहरू आठपहरिया, बेलहारे, याक्खा, लिम्बु आदिले बोल्ने किरात भाषाहरू पूर्वीय किरात भाषा समूह (लिम्बु-नेपाली- अङ्ग्रेजी शब्दकोश, २०५९ः १० लाई परिमार्जित गएिको) अन्तर्गत पर्दछन् ।




चित्र नं. १ः चिनियाँ-भोट भाषा परिवार

यहाँ पल्लो किरात क्षेत्र भन्नाले मेची अञ्चलका ताप्लेजुङ, पान्थर, इलाम र झापा जिल्लाका साथै कोसी अञ्चलका सङ्खुवासभा, तेरथुम, धनकुटा, सुनसरी र मोरङ भन्ने बुझिन्छ । यही क्षेत्र लिम्बु जातिको बसोबास क्षेत्र हो । यसका साथै भारतको दार्जिलिङ र सिक्किम मूलतः टिस्टा नदी पश्चिमको पहाडी भूभाग लिम्बुहरूको बसोबासको मूल थलो हो जुन अरूण नदीसम्म विस्तार भएको पाइन्छ । पछिल्लो समयमा लिम्बुहरू बसाइँ सरेर आफ्नो मूल थातथलोबाट अन्यत्र पनि बसोबास गर्न थालेका छन् । काठमाडौँ उपत्यकाका काठमाडौँ, ललितपुर, भक्तपुर र नेपालबाहिर भारतको डुवर्स, आसाम, मेघालय, नागाल्यान्ड र मणिपुर, भुटान, म्यान्मार (बर्मा) मा लिम्बुहरूको ठुलो जनसङ्ख्या बसोबास गर्द्यछ । डा. हर्क गुरूङले तयार पारेको अटलासअनुसार नेपालको ७५ जिल्लामा नै लिम्बुहरूको बसोबास रहेको देखाउँदछ ।




चित्र नं. २ः नेपाल अटलास अव एथ्निक एन्ड कास्ट ग्रुप

## १.२ याक्थुङ्बा (लिम्बु) जाति

लिम्बु जातिले आफूलाई आफ्नै भाषामा **याक्थुङ्** जाति भनेर सम्बोधन गर्दछ । याक्थुङ् शब्दको बदलामा **याक्थुङ्बा** र **याक्थुम्बा** शब्द पनि

उतिकै प्रचलनमा रहेको छ । यसरी नै प्रयोग र प्रचलनमा पुरूषलाई जनाउनु पर्दा याक्थुङ्बा र स्त्रीलाई जनाउनु पर्दा याक्थुङ्मा भनिन्छ । यता **लिम्बु** शब्दको व्युत्पत्ति कहिले भयो भन्ने विषयमा मतैक्य छैन । मञ्जुल याक्थुम्बाले लिम्बु शब्द नेपाल एकीकरणको क्रममा पृथ्वी नारायण शाहले प्रचलनमा ल्याएको शब्दको रूपमा लिन्छन् । किरात इतिहासकार इमानसिंह चेम्जोङ् (२०११) ले भने लिम्बुवान शब्दको व्युत्पत्ति लि (धनु) + आबु (हान्ने, हान्यो) = वान (नाउ लाउनु) अर्थात् किराती भाषामा धनुर्वाणले जितेको देश भनी उल्लेख गरेका छन् ।

लिम्बु शब्दको विकासका बारेमा लिम्बु भाषा-साहित्यका अन्वेषक विरही काइँलाले यसरी उल्लेख गरेका छनः *लिम्बु बोलीमा 'लिङ्बा' को अर्थ उम्रेको हुन्छ । त्यसर्थ आफै उम्रेको 'लिङ्बा' < लिङब< लिम्ब< लिम्बु भयो र लिम्बुको थलोको नाम लिम्बुवान रहन गयो (काइँला, २०४७ः पृ.२३)* ।

याक्थुङ् जातिलाई खसबोली बोल्नेले **लिम्बु,** लाप्चा (रोङ) जातिले **चोङ** भनेर सम्बोधन गरेको पाइन्छ । यसरी नै इडेन भेन्सिटार्टको भनाइमा नेपाल र सिक्किमका तिब्बतीयन र भुटियाहरूले याक्थुम्बाहरूलाई चङ (Tsang) (GURKHAS, पृ. १०४) भन्दछन् ।

इडेन भेन्सिटार्ट याक्थुङ् जाति बारेमा लेख्छन्ः Limbus were first known by the name of Yakthumbas अर्थात् लिम्बुहरु पहिला याक्थुम्बा नामले चिनिन्थे (भेन्सिटार्ट, ऐ. पृ. १०७) ।

वि.सं. १८३१ मा पृथ्वी नारायण शाह र लिम्बु सर्दारहरूबीच लालमोहर गर्दा पहिले 'राय' र पछि सुभाङ्गी हुँदै 'सुब्बा' नामले पनि लिम्बुहरु चिनिन थाले र यो चलन अद्यावधि रहेको छ ।

### १.३ याक्थुङ्बा (लिम्बु) हरू राजनीतिक रूपले तीन देशमा विभक्त भए

याक्थुङ्बा या लिम्बु जाति भाषा र संस्कृतिको आधारमा एकै थिए र हुन् । तर विभिन्न राजनैतिक घटनाक्रमले तिनको राजनैतिक एकतामा असर पार्दछ । यही प्रकारको घटनाको रूपमा लिन सकिन्छ सुगौली सन्धिलाई । तत्कालीन नेपाल र ब्रिटिस इस्ट इन्डिया कम्पनीबीच ईस्वी

संवत् १८१५ डिसेम्बर २ मा हस्ताक्षरित तथा ई.१८१६ मार्च ४ मा स्वीकृत सुगौली सन्धि (पृ. ६०, गोर्खाभर्ती) पछि किरात प्रदेशका पूर्वीभाग मूलतः मेची नदी पूर्वको भूभाग कम्पनीको अधिकारक्षेत्रमा पर्न गयो । यसको दुई वर्षपछि १० फरवरी १८१७ मा सिक्किमका राजा चुङ्फुद् नामग्यालसँग कम्पनीले तितालियामा सन्धि गरेर मेची पूर्वका किरात प्रदेश सिक्किमलाई छोडिदियो । सन् १८३५ मा दार्जिलिङ र सन् १८६४ मा कालेबुङ र सिलगढी अङ्ग्रेजले आफ्नो कब्जामा लिएपछि एउटै लिम्बुहरू नेपाल, सिक्किम र हिन्दुस्तान गरी तनि देशका नागरिक हुन पुगे (काइँला, २०४९) ।

यस घटनाले लिम्बु जातिको आदि थलो लिम्बुवान मात्र विभातिज भएन उनीहरूको भाषिक, सांस्कृतिक प्रगति र उन्नतिमा पनि ठुलो व्यवधान खडा हुन पुग्यो ।

## १.४ याक्थुङ् पाःन् (लिम्बु भाषा) र यसका विशेषता

लिम्बु भाषा भोटवर्मेली महापरिवारमा पर्दछ । यस भाषालाई भोटवर्मेली परिवारको पूर्वीय शाखाअन्तर्गत बोडिक (bodic) उपशाखाको हिमाली वर्गको पूर्वी किराती भाषा (पृ.१०, **लिम्बु नेपाली अङ्ग्रेजी शब्दकोश**, २०५९) को रूपमा चिनिन्छ । यो भाषाको थुङ्साप परम्परा (श्रुतिशास्त्रको परम्परा) र पेसाप् (लेख्यशास्त्रको परम्परा) रहेको आम विश्वास रहेको छ ।

लिम्बु भाषाको भाषिक अध्ययन पर्याप्त मात्रामा नभए पनि केही मात्रामा छ । यसर्थ, भाषाविद्हरूले यो भाषाको विशेषता केलाएका छन् । जस्तैः फोनोलोजी वा वर्णविज्ञानमा १३ स्वर (राई स. २०५८ः ३६) वर्णहरू छन् भनिएको छ । सुब्बा-मुरिङ्ला (स. २०५०) ले स्वरवर्ण ९ अ, आ, इ, उ, ए, ऐ, ओ, औ, एः, व्यञ्जनवर्ण २५ मूल व्यञ्जनवर्ण १८ क च त प ख छ थ फ य र ल व श स ह ङ न म तथा स वर्ण ७ ग ज द ब घ ध भ, ८ सङ्युक्ताक्षर, ३ एकतुम सक गरी जम्मा ४५ ध्वनि वर्णहरू छन् भनेका छन् । ग्लोटल स्टप वा कन्ठ्यस्पर्शी यो भाषाको ध्वनिको विशेषता हो । रूपविज्ञानमा एक वचन, दुई वचन र बहुवचन भेद, दुक्ष्ए वचन र बहुवचनमा समावेशी (inclusive) असमावेशी (exclusive) सहित,

सर्वनामिकरन (pronominalization) विशेषता पाइन्छ । लिम्बु भाषामा निम्नअनुसारका स्वरवर्ण र व्यञ्जन वर्णहरु (लिम्बु–नेपाली–अङ्ग्रेजी शब्दकोश, २०५९, पृ. ३५) छन् । व्यञ्जन वर्णहरु वर्ण र संवर्ण गरी दुई प्रकारका रहेका छन्–

स्वरवर्ण

| | | | |
|---|---|---|---|
| ᤀ/अ | ᤀ᤺/अः | ᤀᤠ/आ | ᤀᤠ᤺/आः |
| ᤀᤡ/इ | ᤀᤡ᤺/इः | ᤀᤢ/उ | ᤀᤢ᤺/उः |
| ᤀᤣ/ए | ᤀ᤺ᤣ/एः | ᤀᤤ/ऐ | ᤀᤥ/ओ |
| ᤀᤥ᤺/ओः | ᤀᤦ/औ | ᤀᤧ/ए़ | ᤀᤧ᤺/ए़ः |

व्यञ्जनवण

| वर्ण | संवर्ण | वर्ण | संवर्ण |
|---|---|---|---|
| ᤁ(क) | [ᤃ] [ग] | ᤂ(ख) | [ᤄ] [घ] |
| ᤅ(ङ) | | ᤆ(च) | [ᤈ] [ज] |
| ᤋ(त) | [ᤍ] [द] | ᤌ(थ) | [ᤎ] [ध] |
| ᤏ(न) | | ᤐ(प) | [ᤒ] [ब] |
| ᤔ/म | | ᤕ(य) | |
| ᤗ(ल) | [ᤖ] [र] | ᤘ(व) | |
| ᤛ/ᤙ(स) | [ᤚ] | [ᤙ] | ᤜ(ह) |

**१.५ याक्थुङ् पाःन्जेङ (लिम्बु भाषिका) हरू**

कुनै पनि भाषिक समुदायभित्र ध्वनि, उच्चारण र संरचनागत क्षेत्रीय विभेदका आधारमा देखिने भेदउपभेद (नेपाली बृहत् शब्दकोश, २०५८ पृ.९५३) नै भाषिका हो । संसारका भाषाहरूको भाषिकाहरूलाई मुख्यत तीन

समूहमा विभाजन गर्ने गरिन्छः (क) क्षेत्रीय या भौगोलिक (regional or geographical) आधारमा, (ख) सामाजिक (social variety or sociolect) आधारमा र कालक्रमिक आधार (temporal or historical) आधारमा । लिम्बु भाषामा भौगोलिक र समयक्रमिक भाषिका भने छन् तर सामाजिक भाषिका ट्डकारो अस्तित्वमा रहेको पाइएको छैन ।

हालसम्म लिम्बु भाषाको भौगोलिक आधारको भाषिकाहरूको चर्चा प्रायः लेखकहरूले गर्दै नै आएका छन् । धेरै जसो भाषाविज्ञहरूले लिम्बु भाषामा निम्न चार भाषिकाहरु रहेको उल्लेख गरेका छन्–

**तमोरखोले**ः ताप्लेजुङ जिल्लाका विशेषतः तमोरखोला र त्यसका सहायक मेवा खोला र मैवा खोला क्षेत्रमा बसोबास गर्ने लिम्बुहरूले बोल्ने भाषिकालाई तमोरखोले भाषिका भनिन्छ ।

**पान्थरे**ः ताप्लेजुङको याङवरक, धनकुटाको चौबीस थुमका साथै इलाम र पान्थर जिल्लामा यो पान्थरे भाषिका बोलिन्छ । यो भाषिकालाई मानक भाषिका मानिँदै आएको छ र यसैमा लेखन, प्रकाशन र पठनपाठनको काम भइरहेको छ । ताप्लेजुङको याङवरक र मूलतः सिक्किमतिर बोलिने लिम्बु भाषालाई यसले समेट्छ भनिए पनि व्यवहारिक दृष्टिले हेर्दा त्यस्तरी समेटेको आभास हुँदैन । यसर्थ पनि कतिपयले याङ्वारक क्षेत्रमा बोलिने लिम्बु भाषा छुट्टै भाषिका हुनुपर्दछ भनी आफ्नो मत अगाडि सारेको पाइन्छ ।

**फेदापे**ः तेरथुम जिल्लामा बोलिने लिम्बु भाषिकालाई नै फेदापे भनिन्छ । एकै चक्लामा बस्ने सबैभन्दा ठूलो लिम्बु जनसङ्ख्याले बोल्ने लिम्बु भाषिका पनि फेदापे नै हो ।

**छथरे**ः छथरे भाषिका धनकुटा जिल्लाका ताङ्खुवा, हात्तीढुङ्गा, भिरगाउँ र बन्चरे अनि तेरथुम जिल्लाका दक्षिण-पश्चिम क्षेत्रमा पर्ने दाङ्गपा, छथर-पोखरी, हमरजुङ र ओख्रेतिर बसोबास गर्ने लिम्बुहरूले बोल्ने गर्दछन् । छथरे बोल्नेले अन्य लिम्बु भाषिका बढी मात्रामा बुझ्दछन् भने अन्य लिम्बु भाषिका बोल्नेले छथरे भाषिका केही कम मात्रामा बुझ्दछन् । छथरे

भाषिका अन्य लिम्बु भाषिकाहरूमध्ये सबैभन्दा जेठो र कम परिवर्तन भएको भाषिका भनेर पनि भाषाविद्हरू दावी गर्दछन् । त्यसै भएर होला छथरे भाषिका लिम्बु भाषाका भाषिकाहरूमध्ये टड्कारै फरक भएको भाषाविद्हरूको निष्कर्ष रहेको छ ।

## १.६ लिम्बु भाषा-साहित्यको विकासक्रम

लिम्बु बोलचालमा **थुङ्साप्** र **पेसाप्** दुई शब्दहरू ज्यादै प्रचलित छन् । यी शब्दहरू निकै प्राचीन प्रतीत हुन्छन् । **थुङ्साप्** शब्दले मौखिक परम्पराको रूपमा लोकमा एकपुस्तादेखि अर्को पुस्तामा हस्तान्तरण हुँदै आएका विशद मुन्धुम्लाई जनाउँदछ । यता **पेसाप्** शब्दले भने लिम्बु भाषामा लेख्यपक्षलाई जनाउँदछ । यो **पेसाप्** शब्दलाई आधार मान्ने हो भने लिम्बु भाषामा लेख्य साहित्य धेरै पहिलेदेखि नै रहेको अनुमान लगाउन सकिन्छ । लिम्बु समाजमा प्रचलित मुन्धुम्को प्रणेता मानिएका येहाङ्ले धर्मशास्त्र ज्ञानको विषयमा परामात्मा तागेरानिङ्वाभु माङ्को उपासना गरी उनी खुशी भएर दर्शन दिएपछि ज्ञानका निम्ति विन्ती गर्दा निङ्वाभु माङ्ले छालामा लेखेको धर्मशास्त्र दिएको कथा पनि लिम्बु लोकमा प्रचलित कथा हो । यसले पनि लिम्बु भाषामा आदिकालदेखि लिखित साहित्य भएको सङ्केत गर्दछ । त्यसै भएर पनि लिम्बु कवि तथा चिन्तक पुष्प थाम्सुहाङ्ले लिम्बु लोक समाजमा अध्यावधि प्रचलनमा रहेको मुन्धुम्को चर्चा गर्दै **मुन्धुम्को रचना काल नै लिम्बु साहित्यको काव्य विधाको स्वर्णिम काल** (साहित्यिक श्रष्टा र दृष्टिकोण, पृ. ९३) भनी आफ्नो मत अगाडि सारेका छन् ।

जेजस्तो कथाकुथुङ्ग्री भए पनि, दावी र अनुकल्पनाहरू गरिए पनि लिम्बु भाषा र साहित्य लेखिएको प्राचीन कालीन लिखतहरू आजसम्म प्राप्त हुन सकेको छैन । सम्भवतः सबैभन्दा पुरानो लिखतको रूपमा लन्डनस्थित इन्डिया अफिस् लाइब्रेरीमा सुरक्षित ब्रायन हज्सनको सङ्कलनमा रहेको र त्येअङ्सी सिरिजङ्गा (सन् १७०४-१७४१) आफैले तयार गरेको हो भनेर वर्णन गरिएको हस्तलिखित सामग्रीलाई मान्नुपर्दछ । तीमध्ये हज्सन पाण्डुलिपि भोल्युम ८६, पृष्ठ ६६ मा सङ्कलित त्येअङ्सी सिरिजङ्गाको

हुन सक्ने अनुमान गरिएको मुन्धुम् साप्ला (चित्र नं. ३) मा उल्लेख गरिएको छः श्री सिक्कुम् फुमा निङ्वाहाङ्मा पात्दुङ्लो. साक्सिङ् ओमालो. कुसे.न् कुरे.न् याक्धुङ्हाङ् साप्ला नित्मालो. चाफ हुक्सिक् चुक्रलो. चमे.न् मिक्सिन् चुक्रलो साप्ला निलु याक्धुङ्हाङ्. साप्ला निलु याक्धुङ् नोलो. साप्ला साप्तु यक् ।



चित्र नं. ३

यस लेखोटको यकिन मिती नभए पनि यो सन् १७४१ पूर्व लेखिएकोमा कुनै विवाद छैन । यसर्थ लिम्बु भाषामा लेखिएको सबैभन्दा पुरानो लेखोट यही हो भन्न सकिन्छ ।

विरही काइँला (२०४९: ५५-५६) का अनुसार *सन् १७४५ मा प्रकाशित बेन्जामिन सुल्जीको 'ग्रामेटिका हिन्दोस्तानिका' पातो ३ को भूमिका व्यञ्जनवर्ण शीषकअन्तर्गत कदेखि हसम्म नागरी लिपिका नमुना प्रस्तुत गर्दा लिम्बुका क ङ भ ग प य स अक्षरहरु प्रकाशित* भएका थिए र तिनै लिखत लिम्बु भाषाको सबैभन्दा पुराना लिखत हुन् भनिए तापनि ब्रायन हज्सनले सन् १८४४ देखि १८५८ सम्म नेपाल, दार्जिलिङ र सिक्किमबाट सङ्कलन गरेका र इन्डियन अफिस् लाइब्रेरीमा रहेका किरात लिपिमा नै लेखिएका केही पुराना सामग्री बेन्जामिन सुल्जीले लेखेभन्दा अगाडिको हुन सक्ने सम्भावना नकार्न सकिन्न ।

यसरी नै  क्याम्बेल (१८५५ ई.) ले सिक्किमका कर्नेल मेन्चेरिङले सङ्लन गरिदिएको किरात वर्णमालाको परिचय एसियाटिक सोसाइटीको जर्नलमा

प्रकाशित गरिदिएका थिए । सन् १९२५ जुलाई २६ का दिन भारतको कालेबुङमा मैतसिंह थेगिमको सभापतित्व (अध्यक्षता) मा याक्थुङ्हाङ् चुम्लुङ् गठन भयो । यस संस्थाको गठनले लिम्बु भाषा साहित्यको विकासले ऐतिहासिक मोड लियो । बाजवीर सुब्बा थलङ्को एकल लेखनमा 'याक्थुङ् साप्ला (१९२८ ई.)' र स्वयम् बाजवीर थलङको लेखन र इमानसिंह चेम्जोङ्को सहलेखनमा 'निसिगेक याक्थुङ् साप्ला (१९३१ ई.)' प्रकाशित भए । बाजवीर थलङका यी पुस्तक प्रकाशित हुँदा हिन्दी र खस नेपाली लेखिने नागरी लिपि र उच्चारणको पूरै प्रभाव परेर आकारान्त किरात अक्षर अकारान्तमा परिवर्तन गरिएको र लिपि पनि सोहीअनुसार विकास भएको पाइन्छ । उल्लिखित दुईवटा पुस्तकहरु तयार भई प्रकाशन भएपछि लिम्बु भाषा र किरात लिपिको प्रचारले निकै तीव्रता लिएको थियो ।

यसपछि सन् १९५१ मा इमानसिंह चेम्जोङ्, मनबहादुर खाम्धाक र पदमसिंह सुब्बाको पहलमा **'तुम् याक्थुङ् निङ्वाफु साप्ला'** र **'याक्थुङ् निसिगेक साप्ला'** प्रकाशित भए जुन किताबहरूको सहायतामा सन् १९६८ मा सिक्किमका सरकारी विद्यालयाहरूमा पठनपाठन सुरू भयो ।

वि.सं. २०१२ तदनुसारमा १९५६ मा सुब्बा खड्गबहादुर नेम्बाङ् रचित मौलिक कृति **'किराँत मिक्-हऽन साम्लो'** प्रकाशनमा आयो । यस कृतिले लिम्बु साहित्य लेखनमा आधुनिकताको आरम्भ गऱ्यो । वि.सं. २०१८ मा प्रकाशित पाङ्खरे योबाआङ येरा लिम्बु भाषाको कथा सङ्ग्रहमा काजीमान कन्दङ्वा रचित **घरबार** शीर्षकको आधुनिक लिम्बु कथा प्रकाशनमा आयो । वि.सं.२०२४ भदौ तदनुसार सन् १९६७ अगस्टमा पहिलो लिम्बु भाषाको पत्रिका **कोम्**को प्रकाशन भयो । वि.सं. २०४० तदनुसार सन् १९८३ मा पदमसिंह सुब्बाले लेख्नुभएको पहिलो लिम्बु उपन्यास **थत्थामा**को प्रकाशन भयो । सन् १९८६ मा वीर नेम्बाङ् रचित **सेम्मुइ** खण्डकाव्य प्रकाशित भयो भने वि.सं. २०६० पुस तदनुसार सन् २००४ जनवरीमा अमर तुम्याहाङ् रचित महाकाव्य **सोधुङ्गेन् इमानसिङ् चोःत्लुङ्** प्रकाशित भयो ।

### १.७ लिम्बु भाषा आखेलन र लिपि

लिम्बु भाषा आलेखनका लागि किरात लिपिको प्रयोग भई आएको छ । यस किरात लिपिलाई पछिल्लो समयमा आएर किरात सिरिजङ्गा लिपि, सिरिजङ्गा लिपि भनेर पनि पुकारिने गरिएको सुनिन्छ । सिरिजङ्गा हाङ् (सन् ८८०-९१५) ले समेत आफ्ना जनतालाई यसै लिपिमा लेखपढ गर्न लगाएको लोककहावत भए तापनि त्येअङ्सी सिरिजङ्गा (सन् १७०४-१०४१) देखि लिम्बु समुदायमा निरन्तर प्रयोग भइआएको पाइएको छ । यसर्थ पनि किरात लिपि लामो समयदेखि लिम्बु जनजिब्रोअनुसार आलेखन र विकास हुँदै आएको छ ।

### १.८ टुङ्ग्याउनी

लिम्बु भाषा नेपालमा बोलिने भोटवर्मेली भाषापरिवारभित्रको लामो लेखन इतिहास बोकेको भाषा हो । यसका आफ्नै साहित्य रचनाका परम्परा छन् भने आगन्तुक लेखनपरम्परा पनि त्यतिकै प्रयोग भएको पाइन्छ । यस भाषा र साहित्यको आलेखन लामो समयदेखि किरात लिपिमा हुँदै आएको छ । ❑

खण्ड–२

# लिम्बु साहित्य लेखनका औजारहरू

साहित्य मूलतः कविता–काव्य लेखनको लागि अनन्त कालदेखि छन्द प्रयोग भइआएको विदितै छ । छन्द पछि कुनै लिपिमा कुनै पनि भाषाको साहित्य लेख्ने भन्ने विषय पनि लेखनको एक महत्त्वपूर्ण पक्ष हो । यसर्थ यस खण्डमा लिम्बु साहित्य लेखनको लागि चाहिने वा प्रयोग भइआएको र हुनसक्ने छन्द र लिपिको बारेमा चर्चा गरिएको छ ।

## २.१ लिम्बु छन्द विधान

### २.१.१ परिचय

**गति, यति र लय मिलेको वर्ण, मात्रा आदिको गणनाअनुसार पद्यात्मक रचना गरिने कुनै निश्चित मान वा रूप** (नेपाली बृहत् शब्दकोश, ०५८, पृ.४१८) लाई छन्द भनिन्छ ।

छन्द विशेषगरी पद्य साहित्यको विशेषता हो । साहित्यमा छन्दले कविताको छाँट मिलाउने र सुहाउँदो पार्ने युक्तिलाई जनाउँदछ । पूर्वीय काव्यशास्त्रमा छन्दका विचारक आचार्य पिङ्गललाई मानिन्छ । उनले छन्दबारेमा आफ्नो ग्रन्थ **छन्दःशास्त्र**मा गहन विचार प्रस्तुत गरेको पाइन्छ । पूर्वीय छन्द विधानअनुसार छन्दहरु दुई प्रकारका छन्ः वृत्त वा वार्णिक छन्द र मात्रिक छन्द । वर्तमान अवस्थामा छन्दहरु मूल रूपमा तीनवटा प्रकारहरूमा वर्गीकरण गरिएको पाइन्छ । जस्तैः

(क) **शास्त्रीयछन्द**ः वार्णिक छन्द, मात्रिक छन्द ।

(ख) **लोकछन्द**ः झ्याउरे, सवाई, बालन, मालसिरी आदि ।

(ग) **मुक्तछन्द**ः गद्यकविता ।

लिम्बु या याक्थुङ् छन्दको सन्दर्भमा यसको आदि ज्ञाताको रूपमा मुन्धुम्का प्रणेता येहाङ्लाई नै मान्नुपर्दछ । लिम्बु छन्दहरूको आदिमकालीन लिखित रूप नपाइए पनि लोकव्यवहारमा यसको प्रसस्त प्रयोग पाइन्छ । पछिल्लो समयमा आएर करिब डेढसय वर्षदेखि (हज्सन्ले सन् १८४४ देखि १८५८ को अवधिमा लिम्बुवान, दार्जिलिङ र सिक्किमबाट लिम्बु भाषा साहित्यको सामग्री सङ्कलन गरेपछि) भने छन्दबारेमा विशेष चर्चा गरिएको वा उल्लेख गरिएको सामग्री नभए पनि छन्दमा लेखिएका सामग्रीहरु पाइएका छन् । लिम्बु भाषामा पनि निम्नअनुसारका छन्दहरु अस्तित्वमा रहेको पाइन्छ ।

(क) **शास्त्रीयछन्द**ः मुन्धुम्, माङ्घ, तुवा आदि ।

(ख) **लोकछन्द**ः हाक्पारे, पालाम्, ख्याली आदि ।

(ग) **मुक्तछन्द**ः गद्यकविता ।

लिम्बु छन्दहरु प्रयोग गर्दा ध्यान दिनुपर्ने सामान्य नियमहरु निम्नअनुसार हुनसक्छन् भनेर बी. बी. मुरिङ्लाले लिम्बु काव्यमा छन्दबद्धता (निङ्वा?सोम, १९९८, पृ. ४१-४२) शीर्षक लेखमा उल्लेख गर्नुभएको छः

१) चाहे स्वरवर्ण होस् वा व्यञ्जन, सबै वर्णहरूलाई एक अक्षर मानिनुपर्छ, जस्तै- ᤀ(अ), ᤀᤠ(आ), ᤁ(क), ᤂ(ख) इत्यादि ।

२) स्वरका मात्रा लागेका व्यञ्जन-वर्ण सबै एक-एक अक्षर मान्नुपर्छ, जस्तै- ᤁ(क), ᤁᤠ(का), ᤁᤡ(कि), ᤁᤢ(कु) इत्यादि ।

३) स्वर तथा व्यञ्जन-वर्णमा कुनै पनि ᤆᤢᤰ ᤛᤰ (चुक् सक्) या आधाअक्षर लागोस् वा ᤁᤢᤛᤣᤰ ᤛᤰ (कुसेक् सक्) लागोस्, चुक् सक् वा कुसेक् सक् लगायत त्यो स्वर तथा व्यञ्जन-वर्णलाई एक-एक अक्षरमा गणना गरिनुपर्छ जस्तै ᤛᤢᤰᤂᤠᤱ (सुक्खाङ = खोकैँ) । यसमा ᤛᤢᤰ (सुक्) एक अक्षर भयो, ᤂᤠᤱ (खाङ्) अर्को अक्षर भयो । ᤐᤠ᤺ᤳᤋᤣ᤹ (पाःत्ते?=भन) शब्दमा ᤐᤠ᤺ᤳ (पाःत्) एक र अक्षर अनि ᤋᤣ᤹ (ते?) अर्को अक्षर हो ।

४) हामीले छन्द गन्दा लघु अनि गुरू छुट्याइरहनु पर्दैन ।

५) यो वार्णिक छन्दकै हिसाबले गन्ति गरिए तापनि 'गण' मिलाइरहनु पर्दैन । अङ्क गनेर नै यसको छन्द छुट्याउनु र मिलाउनु पर्दछ ।

६) एउटा वर्णपछि कहिलेकहीँ एउटा ᤀᤰᤧᤃᤶ ᤛᤰ (एःक्तुम् सक्=संयुक्ताक्षर) त्यसपछि ᤆᤰ ᤛᤰ (चुक् सक् = आधा अक्षर) आएर मिलेको हुन्छ भने त्यसलाई एउटै अक्षर मान्नुपर्छ, जस्तै- ᤛ᤻ᤰ (स्याक्=च्वाटै) यसमा ᤛ (सा) वर्णको पछि ᤻ ऐःक्तुम् सक ᤰ (क्) मिली चुक् सक् वा आधा अक्षर जोडिएको छ । यी सबै एउटै अक्षर मान्नुपर्छ ।

७) एउटा वर्णपछि माथिकै प्रकारले कहिले-काहीँ ᤀᤰᤧᤃᤶ ᤛᤰ (एःक्तुम् सक) त्यसपछि ᤁᤧᤴ ᤛᤰ (कुसेःक् सक्) लागेको वर्ण आएको खण्डमा त्यसलाई पनि एउटै अक्षर मान्नुपर्छ, जस्तै... ᤆ᤻ᤶ (च्वात्=पानी) ...आदि ।

८) उतारचढाबको आधारमा रहने स्वतन्त्र छन्द जसलाई मुक्तक छन्द भनिन्छ, त्यस्ता छन्दहरु पनि लिम्बु कवितामा छन् । तिनीहरूलाई पनि अक्षरको गन्तिको आधारमा छन्दबद्ध नै गर्ने कोसिस गरिएको छ ।

### २.१.२ लिम्बु छन्दहरू

लिम्बु भाषामा निकै छन्दहरु भए पनि संस्कृतका छन्दहरूजस्तो लघु र गुरू अनि क्रमबद्ध गणहरु नहुने स्पष्ट छ । लिम्बु भाषामा प्रयोगमा रहेका छन्दहरु मात्रिक किसिमका हुन् । लिम्बु भाषामा पाइने केही छन्दहरु निम्नअनुसार रहेका छन्ः

### (क) माङ्घ साम्भाङ् (माङ्घ छन्द)

लिम्बु पुरोहितहरूमध्ये फेदाङ्मा सबैभन्दा जेठो मानिन्छ । उनै फेदाङ्माले तागेरा निङ्वाभुमाङ्को अर्चनाका साथै युमा, थेबा, माङ्गेन्ना, आक्वानामा, कुदाप, पुङ्साम, तक्सङ्बा, पक्चाना, मुदेन्माङ्, चक्खोबा, ताप्फेङ, साक्मुरा आदि देवाताहरूको सेवा र पूजा गर्दा प्रयोग हुने साम्भाङ् या छन्द हो । यसर्थ पनि यो साम्भाङ् (छन्द) लिम्बु साम्भाङ्हरूमध्ये सबैभन्दा जेठो मान्नु अतियुक्ति नहोला । यो छन्द लक्ष्मी सेर्माका अनुसार शास्त्रीय पद्धति अनुरूप राग, सुर, तालमा भावविभोर (लिम्बु छन्दहरु, २०५८,

पृ. ३) हुने प्रकृतिको हुन्छ । यसर्थ शास्त्रीय आधारमा भन्ने हो भने यस साम्भाङ्को प्रयोक्ता र प्रयोगकर्ता फेदाङ्माहरू हुन् । यस माङ्घ छन्दको हरेक हरफमा चार अक्षरहरू आउने गर्दछन् । जस्तै–

| | |
|---|---|
| ᤀᤡᤱᤘᤠ ᤁᤠᤛᤧ | इङ्वा कासे |
| ᤋᤠᤰᤏᤠᤶ ᤋᤠᤖᤧ... | ताक्नाम् तारे... |
| ᤀᤡᤰᤛᤠ ᤛᤧᤖᤧ | इक्सा सेरे |
| ᤂᤠᤶᤒᤧᤰ ᤛᤧᤖᤧ...॥ | खाम्बेक सेरे ...॥ |

भाले बास्यो
भोर भयो ...
धारा ब्यूँझ्यो
माटो ब्यूँझ्यो...॥

| | |
|---|---|
| ᤋᤖᤰᤁᤧᤴᤏᤠ | तरक्केन्ना |
| ᤋᤠᤱᤛᤠᤱ ᤛᤧᤖᤧ... | ताङ्साङ सेरे... |
| ᤌᤰᤛᤠ ᤛᤧᤖᤧ | थक्सा सेरे |
| ᤐᤢᤛᤠ ᤛᤧᤖᤧ... ॥ | पुसा सेरे... ॥ |

अन्तरिक्ष
नव ब्यूँझ्यो ...
प्राणी ब्यूँझे
पक्षी ब्यूँझे ... ॥
*(सोधुङ्गेन इमानसिंह चोःत्लुङ, महाकाव्य, पृ. १०२)*

माङ्घ साम्भाङ्को हरफअघि ᤀᤧ... (ए...) या ᤜᤤ... (है...) आदि फुङ्फेक्वा आउन पनि सक्छन् । जस्तै–

ᤀᤧ... ᤗᤢᤱᤁᤠᤶ ᤏᤧᤖᤧ
ᤏᤰᤘᤠ ᤀᤡᤖᤧ ... ॥
ᤀᤧ... ᤁᤠᤍᤧᤶ ᤋᤡᤖᤧ
ᤏᤠᤶᤀᤡᤰ ᤜᤡᤖᤧ .... ॥

ए...     फुङ्नाम् सेरे
         सक्वा इरे... ॥
         नायेम् तिरे
         चोमिक् हिरे ...॥
ए...     वास चल्यो
         मौरी घुम्यो ... ॥
         बैँस चढ्यो
         दृष्टि लोभ्यो ... ॥

(ख) मुन्धुम् साम्भाङ् (मुन्धुम् छन्द)

लिम्बु समाजमा साम्बाको विशेष स्थान छ । साम्बाले लिम्बु समाजमा रहेका दार्शनिक पक्षहरूको उजागर गर्दछन् । उनीहरूले विश्व ब्रहमाण्ड, धरती, आकास, जल, वायु, प्राणी, मानव, बोटविरूवा, पशुपक्षीदेखि सारा चराचरको उत्पत्ति र तिनको आपसी सम्बन्ध साथै सृष्टिमा तिनको महत्त्वजस्ता पक्षहरूका साथै मानव मात्रको सुकृत्य र कुकृत्यहरु मुन्धुम्मा साम्बाले गाउने गर्दछन् । साम्बाले मुन्धुम् अनुप्रासयुक्त लयमा गाउने गर्दछ । यसरी मुन्धुम् वाचन गर्न वा गाउन प्रयोग हुने साम्भाङ् या छन्दलाई नै मुन्धुम् साम्भाङ् भनिने गरेको छ । मुन्धुम् साम्भाङ् नै लिम्बु समाजमा आदिकालदेखि चल्दै आएको त्यस्तो छन्द हो जसमा सम्पूर्ण मुन्धुम् निहित छ । यसर्थ एकल मुन्धुम् छन्दमा पनि बृहत् महाकाव्य लेख्न सम्भव छ भन्ने कुरा यति विशद् मुन्धुम्बाट स्पष्ट हुन्छ । मुन्धुम् छन्दको आश्चर्यको विशेषता छ । त्यो के भने युगयुगान्तरदेखि सृष्टि र लोक गाथाहरु यही मुन्धुम् छन्दमा एक पुस्ताको साम्बाले अर्को पुस्ताको सम्बालाई सुनाउँदै सुन्दै मुन्धुम् उत्जीवित हुँदै आएको छ ।

मुन्धुमी शब्दहरु ज्यादै आलङ्कारिक हुन्छन् । मुन्धुम् छन्दमा एक हरफमा ५ अक्षर हुने गर्दछ भने यसको अगाडि आवश्यकता अनुसार ञ१-ठँ१ (ए-थो = ए - माथि), ञ१ - ञ्ँ੭੧ (ए - आल्ल = ए - अब) आदि फुङ्फेक्वा आउन सक्छ । जस्तै–

ᤀᤧ - ᤌᤨ - ᤋᤠᤃᤧ᤺ᤖᤠᤔᤠ ᤀᤧ
ᤏᤡᤱᤘᤠ᤹ᤑᤢᤔᤠ ᤀᤧ ॥
ᤋᤢᤳᤋᤢ ᤛᤧ᤺ᤵᤛᤧ᤺ᤖᤨ
ᤋᤢᤶᤔᤩᤠᤱ ᤛᤧ᤺ᤵᤛᤧ᤺ᤖᤨ ॥
ᤕᤠᤰᤗᤠ ᤛᤧ᤺ᤵᤛᤧ᤺ᤖᤨ
ᤛᤢᤜᤠᤱ ᤛᤧ᤺ᤵᤛᤧ᤺ᤖᤨ ॥
ᤔᤡᤎᤢᤱ ᤐᤨᤃᤡᤖᤨ
ᤔᤡᤖᤠᤰ ᤐᤨᤃᤡᤖᤨ ॥
ᤀᤠᤱᤛᤢᤰ ᤐᤨᤃᤡᤖᤨ
ᤕᤢᤰᤔᤡ ᤐᤨᤃᤡᤖᤨ ॥

ए - थो - तागे़रामा ए
निङ्वा?फुमा ए ॥
तुत्तु से़ःप्से़रो
तुम्म्याङ् से़ःप्से़रो ॥
याक्ला से़ःप्से़रो
सुहाङ् से़ःप्से़रो ॥
मिधुङ् पोगिरो
मिराक् पोगिरो ॥
आङ्सुक् पोगिरो
युक्मि पोगिरो ॥

ए - माथि - हे परमेश्वर निङ्वाफुमा ।
गण्यमान्य सज्जन र भद्रनारीहरूका
लागि पूजा-अनुष्ठान गर्नलाई
आगो र ओगोको ज्वाला भई जागौँ ।
दियालोमा सल्केको डढेलोझैँ जागौँ ।

*(तङ्सिङ्तक्मा मुन्धुम्, २०५२, पृ. ३५)*

मुन्धुम् एकल छन्दमा महाकाव्य, खण्डकाव्य वा कविता पनि लेख्न सकिन्छ । मुन्धुम् छन्द अघि आउने फुङ्फेक्वाले वाचनमा मिठास

ल्याउने काम गर्दछ तथापि यसले मुख्य हरफमा आउने शब्दहरूको अर्थमा खासै असर गर्दैन । यसर्थ फुङ्फेक्वा आवश्यकताअनुसार प्रयोग गर्न वा नगर्न पनि सकिन्छ ।

### (ग) तुवा साम्भाङ् (तुवा छन्द)

लिम्बु समाज एक ईश्वरीय अवधारणामा विश्वास गर्दछ । लिम्बु जातिले मान्ने गरेको त्यो परमपरमेश्वर भनेको तागेरानिङ्वाभुमा माङ् हुन् । सम्झने बितिक्कै सम्झने मनुष्यको सम्मुख पुग्न सक्ने, पुकार गरेलगतै पुकार गर्नेको सामु प्रकट हुन सक्ने निराकार तर सर्वव्यापी ईश्वरको रूपमा तागेरानिङ्वाभुमा माङ्लाई लिने गरिन्छ । यी ईश्वर स्त्री रूपधारीको रूपमा पनि लिइने गरिन्छ । उनै परमपरमेश्वर ईश्वर तागेरानिङ्वाभुमा माङ्को प्रार्थनाको क्रममा यो तुवाको विकास भएको मानिन्छ । लिम्बु समाजमा तुवा वा प्रार्थनाको प्रचलन **मुन्धुम्का प्रथम मन्त्रद्रष्टा सावा येहाङ्को पालादेखि नै तागेरानिङ्वाफुमाङ्मा प्रार्थना गर्ने परम्परा मानवमा सृजना भई आएको** (लिम्बु छन्द, २०५८, पृ. ७६) विश्वास गरिन्छ । लिम्बु सभ्यता विकास क्रममा मुन्धुमी या धार्मिक क्षेत्रमा विशेष योगदान पुऱ्याएका मानिएका युगपुरूसहरु सोधुङ्गेन् लेप्मुहाङ्, कान्देन्हाङ्, माबोहाङ्, सिरिजङ्गा हाङ्, यङ्जङ्गा, त्येअङ्सी सिरिजङ्गादेखि फाल्गुनन्दसम्मले उपदेश मात्र दिएका छैनन् आफ्ना अनुयायीहरूलाई कसरी तागेरानिङ्भुमा माङ्को प्रार्थना गर्न सकिन्छ भन्ने पनि सिकाएका र आफैले पनि त्यस्तो प्रार्थना गरेका छन् । यसरी गरिने ईश्वरीय प्रार्थना निश्चित नियममा बाँधिएको हुन्छ । यस्तो प्रार्थना प्रायः १० अक्षरको तीन हरफ र चौथो हरफ पाँच अक्षरको हुने गर्दछ । येहाङ् तुवा यहाँ उदारहणको रूपमा हेर्न सकिन्छः

[illegible]... [illegible]
[illegible]
[illegible]
[illegible] ॥
[illegible]... [illegible]
[illegible]

ᤁᤧ᤺ᤗᤠᤱᤛᤥ ᤋᤧ᤺ᤶᤏᤢ ᤛᤧᤘᤠ ᤌᤠᤱᤅᤠᤱᤗᤥ
ᤔᤠᤱᤅᤧ ᤛᤧᤘᤠᤖᤥ ॥

ओत्... सेसेमाङ् साङ्साङ्माङ् तागे़रामाङ्
हिङ्सिगत् के़जाेःक्पा निङ्वाफुमाङ्
सिवा ताङ्मा सिक्कुम् निङ्वा? माङ्ङे
निङ्वा? आबिरो ॥

ओत्... ते़ःङ्गो योलाङ् वाजिक् लाङ्धुक् थाङाङ्
तक्मिक् पे़न्मिक्ले ओमनु थाङ्ङाङ्
के़लाङ्सो ते़म्नु सेवा थाङ्ङाङ्लो
माङ्ङे सेवारो ॥

ओत्... पावन पवित्र तागेरा देवी
जीवन-मरण गराउने निङ्वाफु देवी
बुद्धि र विवेककी धनी मनकी देवी
बुद्धि देउहै ।

ओत्... अति कष्टले परमात्मा बस्ने ठाउँमा आएँ
सुदृष्टि दिने आँखाले हेर्दै आएँ
भगवान्को पाउ समाउँदै सेवामा आएँ
भगवान् प्रणाम ।

### घ) खाहुन् साम्भाङ् (खाहुन् छन्द)

लिम्बु भाषामा **खाहुन्** शब्दको शाब्दिक अर्थ **अर्ती** वा **उपदेश** भन्ने हुन्छ । अर्ती भनेको जनहितका कुरा वा परभलो कुरा वा अरूलाई खराब कर्म गर्नबाट बच्न दिइने शिक्षा हो । यस्ता खाहुन्हरु हाम्रा पूर्वजहरूको अमूल्य अनुभव र चेतनाबाट जागृत भएका र भावी पिँढीलाई सकारात्मक सन्देश दिने खालका वाणीहरु हुन् । लिम्बु समाजमा प्रयोगमा रहेका यस्ता खाहुन्हरु थुङ्साप (वाच्यशास्त्र) र पेसाप् (लेख्याशास्त्र) का पिता मानिएका येहाङ्देखि समकालीन धार्मिक, सामाजिक, सांस्कृतिक अगुवाहरूको निरन्तर कर्म र जीवन भोगाइले खारिएका अनुवभजन्य कथन एवम्

विचारहरु हुन् । लिम्बु भाषामा चलेका यस्ता खाहुन्हरु निश्चित छन्द विधानमा बाँधेर प्रस्तुत गर्ने परम्परा रहेको छ । सोही छन्दलाई नै **खाहुन् साम्भाङ्** या **खाहुन् छन्द** भनिन्छ । जस्तै–

येहाङ् खाहुन् (येहाङ् उपदेश)

| | |
|---|---|
| ᤂᤢ᤹ᤵᤔᤠ ᤏᤠ᤹ᤵᤔᤠ ᤔᤧ᤹ᤴᤗᤨ ॥ | खु:प्मा ना:प्मा मे:न्लो ॥ |
| ᤂᤧᤔᤠ ᤏᤠ᤹ᤵᤔᤠ ᤔᤧ᤹ᤴᤗᤨ ॥ | खेमा ना:प्मा मे:न्लो ॥ |
| ᤀᤡᤸᤗᤧᤰ ᤆᤨ᤹ᤰᤔᤠ ᤔᤧ᤹ᤴᤗᤨ ॥ | इल्लेक् चो:क्मा मे:न्लो ॥ |
| ᤀᤠᤱᤍᤡᤱ ᤗ᤻ᤔᤠ ᤔᤧ᤹ᤴᤗᤨ ॥ | आङ्दिङ् ल?मा मे:न्लो ॥ |
| ᤂᤡ᤹ᤶᤔᤠ ᤔᤧᤏᤢ᤻ᤏᤧᤴᤗᤨ ॥ | खि:म्मा मेनु?नेन्लो ॥ |

चोर्नु लुट्नु हुँदैन ।
बाझ्नु जुझ्नु हुँदैन ।
छुल्याइ गर्नु हुँदैन ।
घमण्ड गर्नु हुँदैन ।
लोभ गर्नु हुँदैन ।
*(किरात मुन्धुम् खाहुन्, पृ. १)*

सिरिजङ्गा खाहुन्(सिरिजङ्गा उपदेश)

| | |
|---|---|
| ᤏᤢᤔᤠ ᤋᤠᤔᤠ ᤗᤧᤱᤒᤠᤗᤨ ॥ | नुमा तामा लेङ्बालो ॥ |
| ᤁᤵᤔᤠ ᤋᤠᤔᤠ ᤌᤨ ᤏᤧᤖᤨ ॥ | कप्मा तामा थो नेरो ॥ |
| ᤂᤨ᤹ᤔᤠ ᤕᤠᤰᤔᤠ ᤗᤧᤱᤒᤠᤗᤨ ॥ | खो:मा याक्मा लेङ्बालो ॥ |
| ᤛᤡᤔᤠ ᤜᤡᤱᤔᤠ ᤗᤧᤱᤒᤠᤗᤨ ॥ | सिमा हिङ्मा लेङ्बालो ॥ |

सुख सभ्याता बदलिन्छ ।
पुण्य प्राप्त गर्न माथिबाट मात्र हुन्छ ।
गुण प्राप्त गरेका पनि सदा एकनास हुँदैन ।
मर्नेबाँच्नेको ठेगान रहँदैन ।
*(ए.ए. पृ. ५५)*

### (ङ) नुवाःप्मा साम्भाङ् (नुवाःप्मा छन्द)

प्रायः सबै समाजमा नानी सुताउँदा लोरी गाउने चलन छ । लिम्बु समाजमा पनि यो विद्यमान रहेको छ । लिम्बु समाज शिशु वा नानीलाई सुताउँदा लय हालेर गाउने गीतलाई पेरेङ्वा साम्लो वा लल्लोरी गीत भनिन्छ । यसलाई अर्को शब्दमा नुवाःप्मा साम्लो पनि भनिन्छ ।

यस्तो गीत बिजुवाले मोच मार्ने मुन्धुम् वाचन गर्दा पनि प्रयोग गर्दछ । मोच मार्दा बिजुवाले अत्यन्त मार्मिक तरिकाले यो गीतको माध्यमबाट फकाएर मृत शिशुको हंस कब्जामा लिएर त्यसलाई मोचको संसारमा लगेर बाटो छेक्छ भन्ने विश्वास लिम्बु समाजमा छ । यसो गरेमा कसैको कोखबाट जन्मेको बच्चा मरे पनि अर्कोपटक जन्मने बच्चा मर्दैन भन्ने विश्वास गरिन्छ । यो साम्भाङ्को एक हरफमा ६ अक्षर आउने गर्दछ । नानीलाई सुताउँदा प्रयोग गरिने पेरेङ्वा या नुवाःप्मा सम्लोको नमुनाको एक अंशः

| | |
|---|---|
| ᤔᤢᤜᤠᤱ ᤂᤣᤛᤣ ᤂᤣ᤺ᤶᤛᤡᤱ | मुधाङ् खेसे खे़म्सिङ् |
| ᤗᤠᤒᤠ ᤀᤣ᤺ᤸᤗ ᤕᤣ᤺ᤶᤛᤡᤱ | लाबा एःल्ल ये़म्सिङ् |
| ... ᤀᤠᤸᤗᤃ ᤏᤠᤶᤔᤥ᤺ᤳᤋᤡ | ... आल्लग नाम्मो:त्ति |
| ᤀᤡᤶᤗᤥ ᤀᤡᤶ. ᤀᤡᤶᤗᤥ ᤀᤡᤶ ॥ | इम्लो इम्, इम्लो इम् ॥ |

तारामण्डल सुहायो
जून हाँस्दै उभियो
... अब त नाम्मोती
सुत्छ है, सुत्छ है ।
*(वैरागी काइँला, आनि? पाःन्, कक्षा १, २०६४, पृ. ५०)*

### (च) हाम्लाक्वा साम्भाङ् (हाम्लाक्वा छन्द)

नेवार समुदायमा कसैको मृत्यु भएमा टोलै भरिका महिलाहरु सामुहिक रोदन गर्दै मरो मराउ भएको घरमा गइरहेको वा भेला भएर सामुहिक रोदन गरिरहेको भेटिन्छन् । लिम्बु समुदायमा पनि कुनै व्यक्तिको मृत्यु भएमा उसँगको वियोगमा विशेषतः आफन्त महिलाहरु आ-आफ्नो पछ्यौरी

दाया र बायाँ कुमबाट पछ्यौरीको फुर्का पछाडि झर्ने गरी अड्याउँदै आफ्नो अगाडि छातीमा मजेत्रोको बीच भाग तल माला लगाएजस्तो झोलिने गरी लगाएर कारूणिक गायनसँगै रूँदै हिँडेका देखिन्छन् । यस्तो हाम्लाक्वा वा रोदनको क्रममा मरेको व्यक्तिले गरेका काम, बोलेको वचन, उसको सुकीर्ति आदिको वर्णन गरिएको पाइन्छ ।

यस प्रकारको हाम्लाक्वाको प्रत्येक हरफको मूल खण्डमा १२ अक्षर र पछाडि जोडिने काप्फेक्वामा चार अक्षर ᤀᤣ... ᤀᤣ... ᤀᤣ... ᤀᤣ... (ए... ए... ए... ए....) ᤀᤠᤱ ᤜᤢ... ᤜᤢ... ᤜᤢ... ᤜᤢ... (हु... हु... हु... हु...) स्वभाविक रूपमा आउने गर्दछ ।

हाम्लाक्वाको प्रारम्भको कथा खापुना मरङ्ना र उनका छोरा केसाम्ी (बाघ) र नाम्सामी (मनुष्य) सँग जोडिएको पाइन्छ । छोराहरूबीच भएको लडाइँमा नाम्सामीले केसाम्ीलाई बाणले हानी सिमलको रूखबाट झारी मारेको कुरा आफ्नो अगाडि राखेको अन्दङ (बाबरी) र सेक्मारी (सिल्लरी) फूलको कलसमध्ये केसाम्ीको प्रतीक कलसको बाबरी फूल ओइलाएपछि खाप्पुनाले आफ्नो छोरा केसाम्ीको वियोगमा **...अब यो संसारमा केसाम्ी छैन, अब कही पनि भेट हुने छैन भनी आमा हाम्लाक्वाको कारूणिक रूवाइको आवाज गुञ्जायमान गर्न थालिन** ...(लिम्बु छन्द, पृ. ९२) त्यसपछि लिम्बु समाजमा हाम्लाक्वा सुरू भएको विश्वास गरिन्छ । हाम्लाक्वा साम्भाङ्मा मेरिङ सवा अर्थात् करूण रस प्रयुक्त हुन्छ भने नाम्दुवा वा दुखान्त भाव यसले व्यक्त गर्दछ ।

हाम्लाक्वाको साम्भाङ् (छन्द) को नमुनाः

ᤛᤣ᤺ᤐᤡᤱ ᤁᤳᤋᤡᤱᤗᤥ ᤁᤧᤗ᥄ᤖᤧᤴᤏᤧ ᤀᤠᤶᤒᤥᤀᤣ ᤜᤢ... ᤜᤢ... ᤜᤢ... ᤜᤢ...
ᤀᤠᤒᤠᤍᤧ ᤁᤧᤀᤡ᤺ᤔᤳᤛᤡᤱ ᤁᤧᤒᤧ᤺ᤴᤏᤧ ᤀᤠᤶᤒᤥᤀᤣ ᤜᤢ... ᤜᤢ... ᤜᤢ... ᤜᤢ...
ᤜᤢᤖᤡᤳ ᤔᤡᤱᤀᤠᤔᤡᤀᤠ ᤀᤥᤗ᥄ᤖᤧ ᤁᤧᤗ᥄ᤖᤧᤴᤏᤧ ᤀᤣ... ᤀᤣ... ᤀᤣ... ᤀᤣ...
ᤀᤠᤶᤏᤠ ᤜᤢᤏᤧ ᤂᤠᤂᤠ ᤀᤠᤴ ᤀᤠᤶᤒᤡᤳᤛᤧᤏᤠ ᤀᤣ... ᤀᤣ... ᤀᤣ... ᤀᤣ...

से:प्निङ् कत्निङ्लो केल?रेन्ने आम्बोए हु... हु... हु... हु...
आबाडे केइःम्सिङ् केबेःन्ने आम्बोए हु... हु... हु... हु... हु...

नुरिक् चोःक्मा चामा पोःङ्लो के़ल?रे़न्ने़ ए... ए... ए... ए...
आल्ल हाःत्ले़ सेसे लाम् ओःन्धाक्तिगे़बे ए... ए... ए... ए...

छाया र माया दिन्छु भन्थ्यौ नि बुबा हु... हु... हु... हु...
स्वयम् नै अल्पिएर गयौ नि बुबा हु... हु... हु... हु... हु...
राम्ररी गरिखानु पर्छ है भन्थ्यौ नि ए... ए... ए... ए...
अब कसले हामीलाई बाटो देखाउछ नि ए... ए... ए... ए...

**छ) खाउमा साम्भाङ् (खाउमा छन्द)**

लिम्बु समाजमा कोही कसैको स्वभाविक या कालगतीले मृत्य भएपछि अन्तिम संस्कार हुन्छ । त्यसपछि मृतकका आफन्तहरु जुठोमा पर्दछन् । उनीहरूले तुम्म्याङ्हाङ् या पञ्चभलाद्मीको रोहबरमा कहिले काजकिरिया सक्ने भन्ने तिथिमिति तोक्छन् । यसको लागि युम् निःङ्गे या नुनतेल मागेर पछि काजकिरिया गर्ने या लगतै गर्ने या नुनतेल नमागी राखी  बराखी गर्ने चलन हुन्छ । यी जुनसुकै चलन भए पनि काजकिरियाको अन्तिम फुक्का फराक्लो गर्नैपर्छ । त्यसबेला फराक्लो फेदाङ्मा, बिजुवा वा पञ्चभलाद्मीले पनि गर्न सक्छन् । यस्तो फराक्लो गर्दा नाताकुटुम्ब, भानाभान्जाको उपस्थिति अनिवार्य हुन्छ, तुम्म्याङ्हाङ् या पञ्चभलाद्मीको उपस्थिति अनिवार्य हुन्छ । त्यसबेला किरियापुत्रीसहित सबैको उपस्थितिमा आवश्यक सरसामानसहित गरिने फराक्लो गर्दा निश्चित लयमा गर्नुपर्दछ । यसमा मृतकको इतिवृतान्त ल्याउनुका साथै के कसरी मऱ्यो, उसको सातो या हंस कहाँ गयो भन्ने कुरा सिलसिलेवार प्रस्तुत गरिन्छ । यसरी वर्णनात्मक किसिमले गरिने क्रियाकर्मको प्रस्तुतिलाई खाउमा भनिन्छ । खाउमामा फेदाङ्मा, साम्बा या पञ्चभलाद्मीले उच्चारित गर्दा प्रयोग गर्ने छन्द विभाजनलाई **खाउमा साम्भाङ्** भनिन्छ । यस साम्भाङ्को हरेक रहफमा नौ अक्षर हुने गर्दछ । यो खाउमा विधिविधान सकिएपछि किरिया बोकेका आफन्त सुद्ध हुने लोक विश्वास लिम्बु समाजमा रहेको छ । यसपछि जुठो लागेका या किरिया बोकेका मृतकका आफन्तहरु सदाझैँ नियमित अवस्थामा फिर्दछन्, अब उनीहरूले केही कुरा बार्नु पर्ने हुँदैन । मानिसलाई दुःखबाट सुख या स्वभाविक जीवनभोगाइको लोकमा

फिर्न प्रेरित गर्न सक्ने भाव खाउमा छन्दले बोकेको हुन्छ । खाउमा छन्दमा खाउमा गर्नेले ᤀᤥᤒᤡ ᤔᤣ᤺ᤶᤒᤡ (ओबि मे़म्बि = हो कि होइन) या ᤂᤥᤛᤢᤒᤡ ᤔᤣ᤺ᤶᤒᤡ (खोसुबि मे़म्बि = पायो कि पाएन) आदि चार अक्षरमा सवाल गर्ने र तुम्म्याङ्हाङ् या पञ्चभलाद्मीले ᤀᤥᤀᤣ ᤀᤥᤖᤥ (ओए ओरो = हो है हो) ᤂᤥᤛᤢᤀᤣ ᤂᤥᤛᤢᤖᤥ (खोसुए खोसुरो = पाउछ नै पाउँछ है) जस्ता चारदेखि छ अक्षरसम्मको जवाफ दिने अनिवार्य चलन छ । काव्य वा कविता रचना गर्दा यी सवाल वा जवाफ आवश्यक महसुस भए राख्न सकिन्छ र आवश्यक नठानिए नराख्न पनि सकिन्छ ।

लिम्बु समाजमा मानिस को हो र मरेपछि के हुन्छ भन्ने गहन अर्थ बोकेको र खाउमा विधिमा अनिवार्य उच्चारित हुने दुईवटा पङ्ती यसप्रकार छन्:

| | |
|---|---|
| ᤗᤠᤖᤣ᤺ ᤁᤢ᤻ᤛᤠ ᤗᤠᤖᤣ᤺ ᤋᤣ᤹ᤖᤢᤔᤢ | लारे़ कुस्सा लारे़ ते?रुमु |
| ᤗᤠᤶᤗᤣ᤺ ᤁᤢ᤻ᤛᤠ ᤗᤠᤶᤗᤣ᤺ ᤋᤣ᤹ᤖᤢᤔᤢ | नाम्ले़ कुस्सा लाम्ले़ ते?रुमु |
| ᤀᤥᤒᤡ ᤔᤣ᤺ᤶᤒᤡ ᥅ | ओबि मे़म्बि ? |
| ᤀᤥᤀᤣ ᤀᤥᤖᤥ ! | ओए ओरो ! |

जूनको सन्तान जूनले लग्यो रे
घामको सन्तान घामले लग्यो रे
हो कि होइन ?
हो है हो ! (साचो हो है !)

## (ज) केसाम् साम्भाङ् (केसाम् छन्द)

केसाम् लिम्बु जातिको राष्ट्रिय बाजा च्याब्रुङ् बजाएर नाच्दा गाइने गीत हो । **च्याब्रुङ्** र **के** पर्यायवाची शब्दहरु हुन् । **के** शब्दले अधिपत्यको अर्थ बोक्छ भनिन्छ यद्यपि यो **यदृच्छित** शब्द पनि हुन सक्छ भने च्याब्रुङ् शब्द **के**कै आवाज च्याङ् (हुक्चाङ्) र दुम् (सिङ्जाङ्) दुई आवाजका आधारमा राखिएको हो । पछि गएर च्याङ्दुम् शब्द अपभ्रंश भएर च्याब्रुङ् भएको हुनुपर्छ । केसाम् शब्द भने **के** र **साम्लो** दुई शब्दको सन्धि भएर बनेको हो । घरपैसो (थक्थाम्), विवाह (मेःक्काम्), स्वागतसत्कार आदि

शुभकार्यमा मात्र के को प्रयोग हुनेगर्दछ । यस्ता शुभ अवसरहरूमा के या च्याब्रुङ नाच्दा गाइने गीत च्याब्रुङ् या केको तालसँग जोडिएको हुन्छ । यसर्थ केसाम् वाचनभन्दा पनि गायन या गायकीसँग सम्बन्धित हुन्छ ।

के या च्याब्रुङ्को उत्पत्तिबारेमा केसामी (बाघ) लाई नाम्सामी (मनुष्य) ले लडाइँमा हराएपछि उसको छालाले के बनाएको तथा केदेम्बा नामक व्यक्ति हङ्सिङ्को रूख काटी च्याब्रुङ् बनाएको फरकफरक दुई कथाहरु पनि लिम्बु लोकमा प्रचलित छन् । यसका साथै सोधुङ्गेन् लेप्मुहाङ्का छोरा पाजाइबाले प्रथम मानव घर बनाउँदा आफ्नी चेली सापरीहाङ्माको मृत्यु भएपछि घरको मूल खाबोमा धमिरा लागेपछि बुबाको आज्ञा बमोजिम धमिरा झार्नका लगि च्याब्रुङ् बनाए र घरको मूल खाबो वरिपरि नाच्दै बजाए । एवम्रीतले **के** या **च्याब्रुङ्**को उत्पत्ति भएको लोक विश्वास रहेको छ । यी लोक कथाहरूमध्ये कुनचाहिँ बढी विश्वासनीय छ भनी विश्लेषण गरे अवश्य कुनै एकको नजिक पुग्न सकिएला । तर यहाँ केसाम्को सन्दर्भ भएकाले त्यही विषय सान्दर्भिक हुन्छ । केसाम् गीतको मुख्य हरफ आठ अक्षरको हुने गर्दछ । यस मुख्य हरफको पछि **सोरिलै सर** या **सरलै सर** भन्ने काप्फेक्वा जोड्ने चलन छ । यसका लागि केही उदाहरण निम्नअनुसार प्रस्तुत गरिएको छः

क) फर्मायसी एक टुक्रा केसाम्ः

| | |
|---|---|
| ᤏᤠᤘᤠᤖᤠ ᤆᤥ᤹ᤁᤛᤡᤱ ᤁᤢᤄᤧᤶᤗᤥ | नावारा चोःक्सिङ् कुघे़म्लो |
| ᤁᤧ᤺ᤖᤡᤖᤥ ᤌᤥᤎᤥ ᤆᤥ᤹ᤋᤗᤢᤱᤎᤥ | के़रिरो थोधो चोःत्लुङ्धो |
| ᤛᤖᤗᤤ ᤛᤖ. ᤛᤖᤗᤤ ᤛᤖ ॥ | सरलै सर, सरलै सर ॥ |

सृष्टि सुहाउँदो रचना भो
पुगौँ है लक्ष्य शिखरको
सरलै सर, सरलै सर ।

ख) केसाम् साम्भाङ्मा रचना भएको काव्यांशः

| | |
|---|---|
| ᤛᤠᤱᤛᤠᤱᤛᤥ ᤗᤢᤱᤎᤢᤱ ᤆᤥ᤹ᤁᤏᤢᤖᤥ | साङ्साङ्सो लुङ्धुङ् चोःक्नुरो |
| ᤛᤧᤛᤧᤛᤥ ᤗᤢᤱᤎᤢᤱ ᤛᤥ᤹ᤁᤏᤢᤖᤥ | सेसेसो लुङ्धुङ् सोःक्नुरो |

| | |
|---|---|
| ᤀᤡ᤺ᤳᤇᤡᤱᤛᤨ ᤁᤧᤳᤇᤧ ᤆᤨ᤺ᤳᤗᤢᤱᤎᤨ | इःत्छिङ्सो केत्छे चोःत्लुङ्धो |
| ᤏᤡᤱᤘᤠ᤹ᤛᤨ ᤕᤢᤱᤛᤧ ᤆᤨ᤺ᤳᤗᤢᤱᤎᤨ | निङ्वा?सो युङ्से चोःत्लुङ्धो |
| ᤆᤨ᤺ᤳᤗᤢᤱᤍᤡᤴ ᤗᤛᤧ ... ᥄᥇᥍᥄ | चोःत्लुङ्डिन् लसे ... ॥१७॥ |

पावन थान बनाउँदै
पवित्र भूमि लम्कँदै
प्रतिज्ञा चोत्लुङ् पुऱ्याउन
मनलाई चोत्लुङ् थमाउन
चोत्लुङ् छिचोल्न ... ।

| | |
|---|---|
| ᤔᤠᤱᤃᤧᤴᤏᤠ᤹, ᤔᤠᤱᤍᤡᤴ ᤕᤧᤶᤛᤡᤱᤗ | माङ्गेन्ना? माङ्डिन् येम्सिङ्ल |
| ᤑᤨ᤺ᤱᤘᤠᤒᤠ ᤛᤠᤶᤔᤡᤴ ᤑᤨ᤺ᤱᤛᤡᤱᤗ | फोःङ्वाबा साम्मिन् फोःङ्सिङ्ल |
| ᤌᤧ᤺ᤰᤘᤠᤒᤠ ᤔᤠᤱᤍᤡᤴ ᤕᤧᤶᤛᤡᤱᤗ | थेःक्वाबा माङ्डिन् येम्सिङ्ल |
| ᤛᤧ᤺ᤵᤘᤠᤒᤠ ᤔᤠᤱᤗᤠᤶ ᤛᤧ᤺ᤵᤛᤡᤱᤗ | सेःप्वाबा माङ्लाम् सेःप्सिङ्ल |
| ᤔᤠᤱᤃᤧᤴᤏᤠ᤹, ᤕᤠ᤹ᤖ ... ᥄᥇᥎᥄ | माङ्गेन्ना? या?र ... ॥१८॥ |

माङ्गेन्ना देव उभियोस्
उदयी देव उदाओस्
सुरक्षा देव जागा होस्
सुरक्षक देवले बचाओस्
माङ्गेन्ना झल्कोस् ... ।
*(सोधुङ्गेन् इमानसिं चोःत्लुङ, २०६०, पृ. ६०)*

## (झ) ताम्के साम्भाङ् (ताम्के छन्द)

वर्तमान युगमा जतिसुकै आधुनिक भनेर दावी गर्ने समाजले पनि मानव सभ्याताक्रमका एकएक चरणहरु पारगर्दै आएको हो । ती विभिन्न चरणहरु पारगर्दा विभिन्न समाजमा विकास भएका समाज अनुकूलका विभिन्न संस्कृतिहरु त्यो वा यो रुपमा अध्यावधि रहनु आश्चर्यको विषय होइन । समाज विकासक्रममा आर्जित संस्कृति, चालचलन आदि समयक्रमा लोपोन्मुख

वा विलुप्त पनि भएको वा हुन लागेको हुन सक्छन् र कतिपय अझ टट्कारो पनि हुँदै जान्छन् । यी र यस्ता घटनाहरु समयचक्रका स्वभाविक परिणतिहरु हुन् । लिम्बु समाजमा पनि कतिपय यस्ता चलनहरु विलुप्त भएका छन् भने केही तन्द्राजस्तो समाजको अवचेतन मनमा मात्र बाँकी रहेका छन् । यस्तो कोटीमा पर्ने एउटा चलन हो **ताम्के** । ताम्के प्राचीन कृषि प्रधान लिम्बु समाजको अमूल्य निधि थियो । यो गायन र क्रमबद्ध चालका साथ खेतीपाती गर्ने अनुपम कला हो र थियो । काम गर्दा काम गर्ने व्यक्तिहरु थकित हुनबाट बचाउने र निरन्तर काममा समर्पित हुन अभिप्रेरित गर्ने मनोवैज्ञानिक साधन थियो, ताम्के । ताम्केको प्रयोगको बारेमा थाम्सुहाङ् पुष्प सुब्बा (वि.सं. २०५८) लेख्छन्- *प्राचीन कृषि युगको थालनीमा युवा र युवतीहरूलाई लहरै उभ्याएर सोरोक्पा नामक वृद्धाले तीनकदम नाच्दै बीस डिग्रीको कोषीय पृथकतामा लट्ठी वा घोचाद्वारा युवकहरूलाई डोब बनाउन लाउने र तीन कदम नाच्दै युवतीहरूलाई धान रोप्दै ल्याउने निर्देशन दिँदै धान रोपाएर कृषि प्रणालीको थालनी गराएको तथा धानबाली उठाएपछि पाँच, तीन, पाँच कदमले नाच्दै धान झारे ।* मूलतः धान र कोदो रोप्दा र मकै गोड्दा कुसरक्पा नाचसँग कदम मिलाउँदै गाइने गीत नै ताम्के हो । यस गीतमा माटो अर्चना, रोपिने वा गोडिने बीउको कुसल फसलको कामनाका गीतहरु गाइन्छन् । **ताम्मा** (झाँगिनु-फैलिनु) र **केमा** (तालिनु लगाउनु) (थाम्सुहाङ्, २०५८) दुई शब्द मिलेर **ताम्के** शब्द निर्माण भएको हो । **ताम्के लाःङ्**लाई **ताम्के अःक्मा लाःङ्** (लाओती, वि.सं.२०४२) पनि भनिन्छ । यही ताम्के नाच्दा गाइने गीतलाई **ताम्के साम्लो** र यसको छन्दविधानलाई **ताम्के साम्भाङ्** भनिन्छ । ताम्के साम्भाङ्को हरेक हरफमा १४ अक्षर हुन्छ र कतिपयमा **हो हौ पोरिरो लो** (येहाङ्, ऐ.) पनि जोडिने गर्दछ । यसपछि **थ्याक्, थ्याक्** काप्फेक्वा पनि जोड्ने गरिन्छ । मकै गोड्दा गाइने ताम्केको नमूनाः

पे़म्बे़न्नाङ् काःङ्हा? पक्खुम्ल, हो हौ पोरिरो लो 'थ्याक्'[३]
काःङ्डिल्ले़ थे़गेःक् थक्खुम्ल, हो हौ पोरिरो लो 'थ्याक्'[३]
कन् माःक्कि पुङ्हा? के़रे़क्के, हो हौ पोरिरो लो 'थ्याक्'[३]
मे़बोआङ् मे़धे़?र के़रे़क्के, हो हौ पोरिरो लो 'थ्याक्'[३]

थाःङ् पोबो हारा मे़बोर, हो हौ पोरिरो लो 'थ्याक्'[३]
च्वा नाम्ले़ मुक्साम् मे़घोर, हो पोरिरो लो 'थ्याक्'[३]
सा?इ नु मु?इ हासुम्लो, हो हौ पोरिरो लो 'थ्याक्'[३]
हाङ्वा नु माङ्वा थास्सुम्लो, हो हौ पोरिरो लो 'थ्याक्'[३]

भावार्थ
दाँजेर कोदालो उठाउँदै, हो हौ बढौँ है 'ठ्याक'[३]
उठेका पासो ठटाउँदै, हो हौ बढौँ है 'ठ्याक'[३]
मकैका विरूवा सबै नै, हो हौ बढौँ है 'ठ्याक'[३]
फैलियोस् बढोस् सबै नै, हो हौ बढौँ है 'ठ्याक'[३]
झन माथि राम्ररी बढोसै, हो हौ बढौँ है 'ठ्याक'[३]
घाम पानी शक्ति मिलोसै, हो हौ बढौँ है 'ठ्याक'[३]
शक्ति र सिद्धि मिलोसै, हो हौ बढौँ है 'ठ्याक'[३]
फलिफाप आशिष पावोसै, हो हौ बढौँ है 'ठ्याक'[३]
*(अदिवासी लिम्बु जातिको सङ्क्षिप्त परिचय पृ. ८४)।*

### (ञ) ख्याली साम्भाङ् (ख्याली छन्द)

तरूनी तन्नेरीहरु भेट भएर धान नाच्नुअघि साइनो केलाउनको लागि ख्यालीबाट संवाद गरी साइनो नलाग्ने टुङ्गो लागेमा धान नाची माया पिरती गाँस्न सक्तछन् । घरमा पाहुनापात आउँदा हेना मुमा (सम्मान प्रकट गर्ने परम्परा) गर्दा ख्याली भन्ने गरिन्छ । किरियाकर्मको फराक्लो सकिएपछिको बेलुका पाहुनाहरूको डेराडेरामा गएर ख्याली भन्ने पनि चलन छ । यसै फर्माइसी रूपमा पनि व्यङ्ग्य ठट्टा गर्नको लागि पनि ख्याली भन्ने चलन छ । ख्याली भन्नको लागि सधैँ विषयवस्तु र सन्दर्भ हुनैपर्छ भन्ने छैन । ख्याली भन्दा हरेक हरफमा १० अक्षर हुने गरेको पाइन्छ । ती १० अक्षरको अगाडि सामान्यतया **ए...** भन्ने फुङ्पफेक्वा लगाइने गरिन्छ । ख्याली भन्दा नाच्नु पर्दैन, आमने सामने बसेर अड्को थाप्दै सवाल जवाफ गरिन्छ ।

लिम्बु गाउँवस्तीमा आफूलाई मन नपर्ने या कर नपर्ने व्यक्ति आफूसामु आएमा यसो भनेर बाध्यता दर्साउने गरिन्छः

[illegible]
[illegible]

ए...    सिङ्गारि मे़ःन्दा निङ्बारी फोःन्छिङ्
        सिरुङ्बा मनाःन् आदगाङ् तोःन्छिङ् ॥

ए...    सिगारी बाखो खरबारी झुन्ड्यो
        डराको-मान्छे अगाडि सऱ्यो ।

रचनामा ख्याली साम्भाङ्

[illegible]
[illegible]
[illegible]
[illegible]

ए...    सुक्खेवा वारःङ् तिङ्सिङाङ् थाङ़े
        सःत्मावा वारक् फाङ्सिङ्ङाङ् थाङ़े
        निङ्वा-ता वायाम् साःक्सिङ्ङाङ् त्ये़रो
        फुङ्वाबा वायाम् ताङ्सिङ्ङाङ् त्ये़रो ॥

ए...    सुखको सागर भरिएर आयो
        हर्षको कुण्ड बारिएर आयो
        खुसीको छेक रोजिँदै आयो
        वासन्ती छेक तैरिई आयो ।

*(सोधुङ्गेन् इमानसिं चोःत्लुङ, २०६०, पृ. २४२)*

## (ट) पालाम् साम्भाङ् (पालाम् छन्द)

धान नाच्दा गाइने गीतलाई पालाम् भनिन्छ । पालाम् गायनको आफ्नै पद्धति छ । यो दोहोरीजस्तै भए पनि सवाल र जवाफ एकपछि अर्को गरेर छिन्छिनमा लगातार दिन मिल्दैन । केटा या तन्नेरीले आफ्नो पूरा सवाल रीतपूर्वक राखिसकेपछि केटीले फर्काउने वा केटीले अगाडि सवाल राखेमा केटाले फर्काउने चलन हुन्छ । पालाम् भन्दा उठान, मुख्य कुरा चरमोत्कर्षको रूपमा अभिव्यक्त गर्ने र बैठान वा आफ्नो पालो समापन गर्नु पर्दछ । त्यसरी नै सवालको जवाफ फर्काउँदा पनि फर्काउनेले रीतपूर्वक अर्थात् उठान, उत्कर्षको रूपमा जवाफको प्रस्तुति र समापन गर्नुपर्दछ । पालममा माया पिरतीदेखि प्रकृति, चराचर कुनै पनि विषयमा सवाल वा जवाफ हुने गर्दछ । पालाम् भन्नको लागि प्रयोग गरिने छन्दलाई पालाम् साम्भाङ् या पालाम् छन्द भनिन्छ । पालाम्को हरेक हरफको मुख्य खण्ड नौ अक्षरले बनेको हुन्छ । पालाम् भन्दा पहिला सवाल राख्ने वा जवाफ दिने जस्को पालो हो उसैले पालाम् उठाउँछ । त्यसपछि पुनः त्यसको पछिल्लो अंश आफै वा पालाम्ले सम्बोधन गरेको व्यक्तिले उठाउँछ र एक साथ भन्दै हा.. हा.. हा.. वा खो.. खाइ.. खो.. भनेर एउटा हरफ टुङ्ग्याउने गरिन्छ । एवम्रीतले यो अगाडि बढ्दछ यसले परिपक्व रूप नलिएसम्म । जस्तै–

सेःङ्घाओ युङ्बे़ कक्फाफाग, ,<br>
कक्फाफाग हा... हा... हा...<br>
मे़न्छाम्गे़न् आनि? याप्मिसाग,<br>
याप्मिसाग हा... हा... हा...<br>
इक्सागे़न् खाम्बेःक् आधोःक्खे़ल्ले़,<br>
आधोःक्खे़ल्ले़ हा... हा... हा...<br>
थिक्नाम्दाःत् सारक् आबोःक्खे़ल्ले़,<br>
आबोःक्खे़ल्ले़ हा... हा... हा...<br>
... ताप्माभुङ् चिर्साःङ् साःक्खिवारि,<br>
साःक्खिवारि हा... हा... हा...

आहिङ्ला थारिक् ला:क्खिपारि,
                    ला:क्खिपारि हा... हा... हा...
भावार्थः
यो जन्म लियौँ धर्तिमाथि,
                    धर्तिमाथि हा... हा... हा...
प्राणीमा कान्छो मानव जाति,
                    मानव जाति हा... हा... हा...
सृष्टिले पोयो गल्ती बुन्दा,
                    गल्ती बुन्दा हा... हा... हा...
मरणशील चोला हाम्रो हुँदा
                    हाम्रो हुँदा हा... हा... हा...
... यो वाक्य बुटी सारै सोचौँ,
                    सारै सोचौँ हा... हा... हा...
बाँचुञ्जेलसम्म बोलौँ नाचौँ,
                    बोलौँ नाचौँ हा... हा... हा...
*(अदिवासी लिम्बु जातिको सङ्क्षिप्त परिचय पृ. ७१-७२)।*

**(ठ) लालिङ्गे़त्/नाम्लिङ्गे़त् साम्भाङ् (लालिङ्गे़त्/नाम्लिङ्गे़त् छन्द)**

वलिहाङ् तङ्नामको अवसरमा घरघरमा गएर खेलिने लारिङ्गे़त् नाम्लिङ्गे़त्को अवरमा भट्याउँदा गाइने छन्दलाई लालिङ्गे़त्/नाम्लिङ्गे़त् साम्भाङ् भनिन्छ । वलिहाङ् बाँचेको खबर बलिहाङ्को राज्यका सम्पूर्ण जनताका घरघरमा गएर दरबारका कर्मचारी र शुभेच्छुक जनताले सन्देश दिनेक्रमसँग यो लागिङ्गे़त्/नाम्लिङ्गे़त् गीतको आरम्भ भएको विश्वास गरिन्छ । यस गीतमा मावन सृष्टि, वलिहाङ्को सुकृति आदि भट्याएर सुनाइन्छ । यस साम्भाङ् वा छन्दको व्यवहारिक प्रयोग गर्दा मुख्य हरफ ४ अक्षरको हुन्छ भने त्यसपछि स्वीकृति स्वरूप भनिने फुङ्फेक्वा लालिङ्गे़त् या नाम्लिङ्गे़त् तीन/तीन अक्षरको हुने गर्द्यछ । लालिङ्गे़त् (चन्द्रोदय) रात्री समय र नाम्लिङ्गे़त् (सूर्योदय) दिवा समयमा प्रयोग गरिन्छ । कविता रचना गर्दा

मुख्या अंश **लालिङ्गेत-मा**लाई मात्र लिएर र फुङ्फे़क्वासहित पनि गरिएको छ । जस्तै–

**क) लालिङ्गे़त्-मा साम्भाङ्को आधारमा रचित अंशः**

| | |
|---|---|
| ᤆᤢᤴᤈᤡ ᤗᤢᤶᤔᤥ | चुन्जि लुम्मो |
| ᤕᤧ᤺ᤳᤆᤠ ᤗᤢᤶᤔᤥ | ये़त्छा लुम्मो |
| ᤔᤠ᤺ᤀᤧ ᤕᤠᤖᤧ | मा:ए यारे़ |
| ᤐᤠ᤺ᤀᤧ ᤕᤠᤖᤧ ॥ | पा:ए यारे़ ॥ |

दु:खबीचमा
दीन बीचमा
आमा नै ठहरियो
बाबा नै ठहरियो ।
*(सोधुङ्गेन इमानसिं चो:त्लुङ, २०६०, पृ. २०१)।*

ख) फुङ्फे़क्वा सहितको लालिङ्गेत् साम्भाङ्मा रचित अंशः

| | |
|---|---|
| ᤗᤠ᤺ᤒᤠ ᤁᤧᤳᤋᤠᤅ | ला:बा केत्ताङ् |
| ᤗᤠ-ᤀᤥ᤺ᤳᤗᤥ | ला-ओ:त्लो |
| ᤏᤠᤶᤔᤡᤴ ᤁᤧᤳᤋᤠᤅ | नाम्मिन् केत्ताङ् |
| ᤏᤠᤶ-ᤀᤥ᤺ᤳᤗᤥ ॥ | नाम्-ओ:त्लो ॥ |

जून झुल्के
जुनेली
घाम झुल्के
उजेली ।
*(सोधुङ्गेन इमानसिं चो:त्लुङ, २०६०, पृ. १५५)।*

## २.१.३ टुङ्ग्याउनी

माथि उल्लेखित साम्भाङ्हरूबाहेक पनि लिम्बु समाजमा पाङ्साम्लो साम्भाङ्सहित अन्य केही अस्तित्वमा नरहेका होइनन् । यिनको पहिचान

गरी उजागर गर्नु त्यति नै महत काम बाँकी छँदै नै छ । यी साम्भाङहरूले लिम्बु साहित्य रचनामा आदिकालदेखि अतुलनीय योगदान गर्दै आएको पक्ष अध्येताहरूले मूल्याङ्कनको तराजुमा राखेर जोख्ने काम गरेका छैनन् । खासमा लिम्बु काव्य साहित्य गद्यभन्दा पद्यमय रहेको कुरामा दुईमत छैन । लिम्बु समुदायका स्रष्टाहरु आफ्ना सभ्यातागत परम्परामा रहेका काव्य क्षेत्रका यी अमूल्य निधिहरु या त पहिचान गर्न नसकेर कि त लिम्बु इतर साम्भाङ् वा छन्दमा लेख्दा आफ्नो पहिचान बनाउन सजिलो हुन्छ भन्ने भ्रममा परेर अलमलिइरहेको पाइन्छन् । यसो गर्नु आफ्नो सभ्याप्रतिको बेइमानी र आफ्नै पनि पहिचान ह्रासको खेतीभन्दा अन्यथा नहोला । ❑

# २.२ किरात लिपि र लिम्बु साहित्य लेखन

## २.२.१ लिपि के हो ?

लिपि भनेको अक्षर लेख्ने प्रणाली (नेपाली बृहत् शब्दकोशः २०५८: १११३) हो । अक्षरचाहिँ व्यञ्जनसहित वा रहित स्वर भएको सिङ्गो ध्वनि वा ध्वनिसमूह (ऐ. २०५८:५) हो अङ्ग्रेजी भाषामा खसनेपालीको **लिपि** शब्दको साम्य शब्द script को अर्थ system of writing ले लेखन प्रणालीलाई इङ्गित गरेको छ । लिपि भन्नु भाषालाई स्थायी रूप दिन प्रयोग हुने ध्वनिहरूको रेखात्मक चिन्हहरु हुन् भन्दा फरक परोइन । लिपिको विकास भाषाको विकासभन्दा कान्छो हो भन्ने कुरामा कसैको मतमतान्तर भएको पाइँदैन । तर भाषाको विकासमा जस्तै लिपिको विकासमा पनि अध्यात्म अन्धताले राम्ररी काम गरेको पाइन्छ । तर पनि एउटा कुरा सत्य हो कि संसारमा प्रचलनमा रहेका प्रायः सबै लिपि चित्र लिपिबाट आरम्भ भएका हुन् र तिनले धेरै कालपछि मात्र ध्वन्यात्मक रूप धारण गरेका हुन् । लिपिको विकासको कुरा गर्दा करिब ६००० ईसापूर्व अगाडिसम्मका लिपिका अवशेषहरु पाइएका छन् ।

## २.२.२ किरात लिपिको विकास

किरात लिपिको विकास कसरी भयो त भन्ने विषयमा विभिन्न विद्वान्हरूको फरक-फरक धारणा छ । किरात लिपिको बारेमा भाषाविद् अमृत योञ्जन र काशीनाथ तमोटको भनाइलाई आधार मान्दै किरात लिपि ब्राह्मी लिपि, तिब्बती लिपि हुँदै किरात लिपिको विकास भएको तर्क अगाडि सार्दै किरात लिपिको वंश वृक्ष यसरी अगाडि प्रस्तुत गर्नुहुन्छ ।




उहाँले तिब्बती लिपिलाई वंशवृक्ष अझ थप विस्तारित रूपमा यसरी प्रस्तुत गर्नुभएको छ ।




यसरी नै विरही काइँला (२०४९:४) ले किरात लिपिको विकासक्रमको बारेमा लिम्बु जातिसँग जोडेर यसरी प्रस्तुत गरेका छन् ।

ब्राह्मीलिपि- ई.पू. पाँचौँ शताब्दीदेखि ई. पछिको तेस्रो शताब्दी

गुप्तलिपि- चौँथो शताब्दीदेखि पाँचौँ शताब्दी

कुटिललिपि- छैटौँ शताब्दी

लिम्बु लिपि- छैटौँ शताब्दीपछि

यसरी नै मदनमणि दीक्षितले '...यो हिमाली उपमहादेशमा ब्राह्मी लिपिलाई संस्कृत भाषाले उपयोग गर्दा सम्भवतः त्यो भन्दा पहिलेदेखि नै हिमालय

र दक्षिणमा कम्तीमा ६ वटा प्राचीन प्राकृत भाषा र तिनका लिपिहरु थिए’ (नवसमन्वयः २०६६:४३) भनी उल्लेख गरेका छन् । उनले अझ थपेका छन्, ‘... किरात लिपि पैशाची भाषाको लिपिसित मिल्दो हो अथवा प्राचीन कालमा ती दुवै एउटै लिपि रहेका पनि हुनसक्छ । लुप्त हुँदै गएको पैशाची लिपिलाई त्येअङ्सी सिरिजङ्गा (हुनुपर्ने सिरिजङ्गाहाङ्?) ले किरात लिपिको रुपमा सन् ९०० तिर उद्धार गरेको हुन् कि ?’ यसबाट किरात लिपि ब्राह्मीलिपिसँग समकालीन मात्र नभएर अझ अगाडिको भएको कुरा प्रष्ट्याएको छ ।

इसा मसीहभन्दा चारहजार वर्ष अघि परसियाको खाडीको उत्तरी समर भूमिमा बस्ने सौमर (किराँत) हरुसँग एकप्रकारको अक्षर भएको सर ह्यामिल्टनलाई उधृत गर्दै विरही काइँला (२०४९ः ३४) ले उल्लेख गर्नुभएको छ । यस कथनले किरात लिपिको प्राचीनतालाई स्वतः पुष्टि गर्दछ ।

इतिहास जित्नेको मात्र लेखिन्छ । हार्नेको सबै चपरीमुनि हो अर्थात् मेटिन्छ । नेपालमा सबैभन्दा लामो समय राज्य गर्ने वंश मानिएका किरातहरुले नेपाली सभ्यतालाई संवृद्धिको सजिसजाउ अवस्थामा पुऱ्याए जसको आधारमा नेपाली इतिहासको स्वर्ण युग मानिएको लिच्छवि युग पुष्पित भयो । यी किरात वंशीहरुले माथि उल्लेख भएको किरात लिपिको प्रयोग गरेका थिएनन् भनेर अनुमान गर्नु दिवास्वप्न हुनजान्छ । उक्त लिपिको विभिन्न आख्यानहरु भए पनि लिखत प्रमाणहरु १८ औँ शताब्दीदेखि मात्र फेला परेका छन् ।

### २.२.३ किरात लिपिमा लिम्बु साहित्य लेखन

पछिल्लो समयमा किरात लिपि लिम्बु भाषा लेखनको लागि लिम्बु समुदायले विशेष रुपमा प्रयोगमा ल्याए । त्यसको परिणाम स्वरुप लिम्बु जनजिब्रो अनुसार मात्र किरात लिपिको प्रयोग गर्नाले प्राचीन किरात लिपिमा भएका कतिपय अक्षरहरु विलुप्त भए भने कतिपयमा नयाँ सुधारका साथ प्रयोग भयो । लिम्बु भाषा मौलिकरुपले आकारान्त भए पनि हाल आएर अकारान्तमा परिणत भएको छ । सोही अनुसार किरात लिपि पनि आकारान्तबाट

अकारान्तमा परिणत भयो । तर व्यवहारिक रूपमा प्रमाणित भएको एउटा एकदमै सत्य कुरा के हो भने लिम्बु भाषा वैज्ञानिक लेखनको लागि किरात लिपिबाट मात्र सम्भव छ । अर्को शब्दमा भन्ने हो भने लिम्बु साहित्यको सहीसलामत लेखन किरात लिपिबाट मात्र हुन सक्दछ ।

यसले अपनत्व र सभ्यताको विराशत बोक्ने काम मात्र गर्दैन, सही उच्चारणको जिम्मेवारी पनि सहजताका साथ निभाएको छ । देवनागरी र रोमनबाट पनि लिम्बु भाषा लेखिने गरेको छ । यस्तो लेखाइक्रममा अन्य लिपिमा लिम्बु भाषा र साहित्य लेख्दा एकदमै जटिलताहरू छन् भने किरात लिपिमा लेख्दा सहजता र प्राकृतिकपना पाइएको छ । लिम्बु भाषाको वर्ण पहिचान (खण्ड १) पूर्ण रूपमा भइसकेको छ । तर भाषा परिवर्तनशील भएकाले समयको विकासक्रमअनुसार भाषा पनि परिवर्तन हुँदै जाने क्रममा लिपि लेखनमा पनि परिवर्तन आउने लिपि लेखनकै सुन्दरता, सरलता र मितव्ययिताका कारण लिपि लेखनमा सुधार आउन सक्ने सत्यतालाई हामीले कवै भुल्नु हुन्न, आजसम्म पत्ता लागेको तथ्य र प्रयोग भएको यथार्थ नै अन्तिम सत्य हो भन्ने उपबुज्रुकपना भोलिका अगुवाहरूले कदापि गर्नु हुन्न । ❑

खण्ड ३

# इतिहास, साहित्य इतिहासको अवधारणा तथा लिम्बु साहित्य

## ३.१ इतिहासको अवधारणा

इतिहास के हो भन्ने अहम प्रश्नको जवाफमा धेरै इतिहासकारहरूले आफ्नो भनाइहरू अगाडि सारेकै छन् । तर इतिहास भन्ने बित्तिकै सर्वसाधारणले बुझ्ने भनेको विगतमा घटेका घटनाहरु हुन् । बौद्धिक रूपमा यसै कुरालाई परिस्कृत पार्दै विगतमा घटेका घटनाहरूको अन्तस्थलमा प्रवेश गरी ती घटनाका क्रममा भएका क्रियाकलापहरूको परिवेशमा मानवीय मस्तिष्कलाई बुझ्नुको अर्थमा इतिहासलाई लिइन्छ । यसर्थ मानव क्रियाकलाप र त्यो क्रियाकलापसँग जोडिएको अतीत समयसँग इतिहासको अन्योन्याश्रित सम्बन्ध हुन्छ । इतिहास अतीत र वर्तमानलाई जोड्ने सेतु हो । त्यसैले सामाजिक विज्ञानको मूल स्रोतको रूपमा इतिहासलाई लिइन्छ । इतिहासको आरम्भ कहिले भयो त भन्ने प्रश्नको स्वभाविक जवाफ हुन्छ– मानव सृष्टिको आरम्भसँगै इतिहासको पनि आरम्भ भयो । तर लिखित रूपमा ? लिखित इतिहासको आरम्भको लागि युगले इतिहासका जनक हेरोडोटस (४८४-४२४ बी.सी.) लाई नै कुर्नुपऱ्यो । इतिहासको प्रभाव व्यापक भएकै कारणले साहित्य इतिहासको सिद्धान्तको विविधपक्षबारेमा स्पष्ट हुन इतिहासको अर्थ, स्वरूप र क्षेत्र, इतिहाससम्बन्धी धारणा आदिबारेमा स्पष्ट हुनु अनिवार्य हुनआउँछ ।

### ३.१.१ इतिहास भनेको के हो ?

पूर्वीय अवधारणाअनुसार इतिहास शब्दको व्युत्पत्ति इति + ह + आस्तेऽस्मिन् अर्थात् यस्तो + अवश्यै + भएको थियो भन्ने आधारमा भएको हो । यसर्थ

इतिहास शब्दको अर्थ वितेका समयमा घटेका घटनालाई बताउँदछ । पूर्वीय दर्शनअनुसार सबैभन्दा पहिला इतिहास शब्दको प्रयोग अथर्ववेदमा भएको मानिन्छ । अङ्ग्रेजीमा इतिहास शब्दका लागि History भन्ने शब्द प्रयोग गरिन्छ । यो History शब्द ग्रिसेली Historia भन्ने शब्दबाट व्युत्पत्ति भएको हो । यसको अर्थ An Enquiry, designed to Elicit truth अर्थात् सत्यको खोजी गर्नु हुनआउँछ । यसबाट यो स्पष्ट हुन्छ कि इतिहास भनेको अतीतका मानवसभ्यातासँग सम्बन्धित घटनाहरूको वर्णन, विश्लेषण र मूल्याङ्न गरी वर्तमानलाई प्रकाशित गर्नु र उज्ज्वल भविष्यको लागि दिशा निर्देश गर्नु हो ।

अब इतिहासकारहरूले इतिहासका बारेमा गरेका केही परिभाषाहरु मनन गरौँ ।

हेनरी पिरेन (Henry Pirenne) का विचारमा "इतिहास समाजमा रहने मनुष्यका कार्य एवम् उपलब्धिहरूको कथा हो" (History is the story of deeds and achievements of men living in the society) ।

मिलर (Miller) का अनुसार "जीवनको गति समुद्रजस्तै छ, मानिस आउँछ जान्छ, लहर उठ्छ र बस्छ र यी सबै इतिहास हुन्" (The course of life is like the sea, men come and go, tide rise and fall, and that is all of history) ।

मार्क ब्लक (Marc Block) भन्छन् "इतिहास समयसापेक्ष मानवीय विज्ञान हो" (History is the science of man in time) ।

ई.एच्. कार (E.H. Carr) का रायमा "इतिहास विगत र वर्तमानबीचको कहिल्यै नसकिने वार्तालाप हो" (History is an unending dialogue between present and past) ।

एच्.जी. वेल्स (H.G. Wells) को निष्कर्ष "मानवीय इतिहास वास्तवमा विचारको इतिहास हो" (Human history is in essence a history of ideas) ।

यी परिभाषाका अनुसार इतिहास भनेको मानव जीवनको विकास र उपलब्धिको कथा हो । इतिहास विज्ञान भएकाले यसको सहायताले मानव सभ्यताको विगतको तथ्यसङ्गत हिसाबले विवेचना गरी वर्तमानलाई सहजताका साथ बुझ्न सहयोग गर्दछ र अगाडि बढ्नका लागि सही विचार दिन्छ ।

### ३.१.२ इतिहासको स्वरूप र क्षेत्र

इतिहासको स्वरूप कस्तो हुन्छ भन्ने विषयमा इतिहासकारपिच्छे फरक हुनु आश्चर्यको विषय होइन । इतिहासकार अनुसारको दृष्टिकोणले यस प्रकारको फरकपना ल्याउँदछ । यहाँ धेरै इतिहासकारहरूको विचार मन्थनले अवश्य ठाउँ र समयको माग गर्दछ । प्रा. डा. दयाराम श्रेष्ठ (२०६५:४-६) सँग सतत सम्मति गर्न सकिने अवस्था भएकाले र सहजताका लागि पनि यहाँ इतिहासका निम्न चार स्वरूपहरु प्रस्तुत गरिएका छन् ।

(क) इतिहासले प्रमाणिक तथ्यहरूको अनुसन्धान गरी तिनको प्रशोधन पनि गर्दछ । कालक्रम मुताविक घटनाहरु उल्लेख गर्नुका साथै घटनाका कारण, घटनाहरूबीचको सम्बन्ध र परिणामको मूल्य निर्धारण तथ्यको आधारमा गर्नु इतिहास लेखनका स्वभाविक प्रक्रिया हो ।

(ख) इतिहास युगचक्रवादी अर्थात् त्रिकालिक आयाममा फैलिएको हुन्छ । यसको मतलव इतिहास भनेको अतीत हो तर त्यही अतीतका आधारमा यसले वर्तमानको विशद् व्याख्या गर्दछ र उज्ज्वल भविष्यको लागि दिशा निर्देश गर्ने प्रयास गर्दछ भलै सोचेजस्तो इतिहास सहज र सोझो बाटो कहिल्यै हिँड्दैन ।

(ग) इतिहासले स्थानीय रूपले आफू स्वायत्त हुने स्वभाव देखाउँछ र सोही अनुसार मानिसको परिवेशको चित्रण गर्दछ । यसको तात्पर्य मानिस स्थानीय भूगोल, संस्कृति, नैतिक मूल्य, मानवस्वभाव आदिको अन्तरङ्ग प्रभावबाट आफ्नो सभ्यताको क्रमिक विकास गर्दै अगाडि बढेको हुन्छ । यसैमा इतिहासको स्वायत्त स्वभाव मुखरित हुन्छ ।

(घ) इतिहास मानवीय चिन्तनधाराको पहिचान गराउने दर्पण हो । अर्को शब्दमा सम्पूर्ण मानव इतिहास विचारका इतिहास हो । इतिहासका घटना, नायकहरू, कारणहरू सहायक मात्र हुन् । इतिहासको मुख्य अर्थात् सार कुरा त विचार हो जसले सम्बन्धित युगलाई अन्य युगभन्दा पृथक पहिचान दिन सक्तछ ।

इतिहासका यिनै केही स्वरूपका आधारमा यसको क्षेत्र व्यापक भएको स्पष्ट हुनआउँछ । यहाँ विचारणीय कुरा के छ भने आदिकालदेखि आधुनिक युगसम्म नै इतिहासको क्षेत्रगत स्वरूप निरन्तर परिवर्तनशील रहेको छ । यसको तात्पर्य इतिहासको क्षेत्र निर्धारण त्यति सहज विषय होइन । यसो भए पनि राजनीतिक, आर्थिक, सामाजिक, सांस्कृतिक, धार्मिक, संवैधानिक, सैनिक, वैचारिक, दार्शनिक आदि क्षेत्रहरू विशेषतः तिनको इतिहासको पाटो इतिहासको क्षेत्र (scope) हरूको रूपमा लिने गरिन्छ ।

युगको विकासक्रमसँगै इतिहासको क्षेत्रमा पनि स्वभाविक परिवर्तन हुँदै आएको छ । इतिहासको सताब्दी भनेर चिनिएको १९ औँ शताब्दीमा सरकार, ठुलाबडा, राष्ट्रिय चेतनाको विकास र राजनैतिक उदारवाद इतिहासको विशेष चासोका क्षेत्र थिए भने २० औँ शताब्दीमा सामाजिक र आर्थिक इतिहासका साथै जनता र व्यक्तिका इतिहासहरू पनि इतिहासका क्षेत्रका रूपमा लिन थालियो । पछिल्लो समयमा आएर मानवशास्त्रीय इतिहासले व्यापक रूप लिएपछि आदिवासीका संस्कृति, रीतिरिवाजहरू पनि इतिहासकारले कलम चलाउने इतिहासका क्षेत्रको रूपमा पहिचान भए । इतिहासको क्षेत्र वस्तुपरक अनुभववादबाट इतिहासवाद (Historicism) मा विकास भएपछि इतिहासले व्यापक रूप लियो । यसपछि सर्वसाधारण जनताको इतिहास, दिनानुदिनको इतिहास, सूक्ष्म इतिहास (Microhistory), विचारको इतिहास (History of Ideas) तर्फ इतिहासकारहरू आकृष्ट भए । अब इतिहासभित्र अन्तर्विषयको इतिहास (Interdisciplinary History), मनोइतिहास (Psycho History), अधि इतिहास (Metahistory) हुँदै समष्टि इतिहास (Total History) सम्म इतिहासको क्षेत्र विस्तार भएको छ र यो अझै नवीन क्षेत्रहरूका साथ अघि बढ्ने कुरामा दुईमत छैन ।

सारमा भन्नुपर्दा इतिहास सामाजिकशास्त्रको सबैभन्दा पुरानो विधा हो । यसका स्वरूप र क्षेत्रहरु सुरूमा सीमित थिए भने समयको विकासक्रममा यिनमा पनि निरन्तर परिवर्तन एवम् विस्तृतीकरण हुँदै आएका छन् । सिद्धान्ततः इतिहास भनेको अनन्त समयको बहाब हो भने व्यवहारिक दृष्टिले त्यही अनन्तताको निश्चित खण्डखण्ड पनि इतिहास हो अर्थात् कालविभाजन पनि इतिहासको स्वरूप हो तर यसको अन्तिम स्वरूप छैन । यही स्वरूपको आधारमा इतिहासको क्षेत्रगत क्षितिज विस्तारित हुँदैजान्छ । यद्यपि सबै राष्ट्र र जातिको राष्ट्रिय र जातीय गौरव र गरिमाका दृष्टिले सम्मान गर्ने परम्परालाई इतिहासले सुरक्षित राखेको छ भन्नुमा अतियुक्ति नहोला ।

## ३.२ साहित्य इतिहासको अवधारणा

इतिहासकारहरूले इतिहासका बारेमा विभिन्न परिभाषा दिंदा कुनै पनि मुलुकको राजनीतिक, आर्थिक, सामाजिक, सांस्कृतिक, धार्मिक, संवैधानिक, सैनिक, वैचारिक, दार्शनिक, आदिलाई समेटे पनि साहित्यलाई पृथक रूपमा समेटेको पाइन्न । त्यसो भए साहित्यको इतिहास नै हुन्न त भन्ने स्वभाविक प्रश्न उठ्छ । यो पनि स्पष्ट छ कि साहित्य भनेको सामाजिक एवम् सांस्कृतिक जीवनको अभिन्न अङ्ग हो । तर साहित्य सामाजिक एवम् सांस्कृतिक जीवन भोगाइक्रमका मानवीय अनुभूतिको कलात्मक अभिव्यक्ति हो, ठोस विषयवस्तुको तथ्यपरक प्रस्तुति होइन । साहित्य सम्बन्धित समाज र संस्कृतिलाई सोही संस्कृति अनुसरण गर्ने या अन्तरसंस्कृतिका अनुयायीहरूबीचमा कोमल र चिताकर्षक ढङ्गले जोड्ने काम साहित्यले नै गर्दछ । उपरोक्त साहित्यको पनि रचना, रचनागर्भ, लेखन, प्रकाशन, प्रकाशित कृतिको मानव समुदायमा प्रभावको त ठोस अस्तित्व हुने भयो, अथवा साहित्यको भावपक्ष र वस्तुगत पक्ष पनि हुने नै भयो । त्यसै पक्षको तथ्यलाई आलेखन गर्नु साहित्यको इतिहास लेख्नु हो । इतिहासको स्वरूप र त्यसको क्षेत्र विस्तारले नवीन क्षितिज उघारिरहेको अवस्थामा साहित्यको इतिहास लेखिनु वा साहित्यको इतिहास भन्ने पदावली अस्वभाविक र आधारहीन कुरा हुन सक्दैन । साहित्यको इतिहास लेख्दा सही साहित्यको इतिहास त्यतिबेला हुनेछ जब त्यसले इतिहासका मूल्य र मान्यताहरु सहीरूपमा अनुसरण गरी लेखिनेछ ।

### ३.२.१ साहित्य इतिहासको अर्थ

सामान्य इतिहास मानिसको अतीतको कथा हो भने साहित्यको इतिहास मानिस अर्थात् साहित्यकारको सांस्कृतिक चिन्तनबाट प्राप्त कृतिका सामाजिक प्रभावहरूको श्रृङ्खलाबद्ध कथा हो (श्रेष्ठः २०६५: ३०) । साहित्यको इतिहासमा पनि तथ्यप्रति नै आग्रह हुन्छ, तर तथ्यहरु साहित्यिक मान्यताद्वारा प्रमाणित गरिएका हुन्छन् । इतिहासको जस्तै साहित्य इतिहासको पनि आफ्नै स्वसमय रेखा हुन्छ तर त्यो इतिहासको मूल प्रवाहभन्दा पृथक हुँदैन । साहित्यको इतिहास भन्नाले सांस्कृतिक मान्यता प्राप्त मानव अभिलेखको रूपमा पनि लिन सकिन्छ । सामान्य इतिहासजस्तै साहित्य इतिहासमा पनि भाषिक भूगोल, धार्मिक र नैतिक आस्था, सामाजिक परिवेश, जातीय संस्कार र संस्कृति, युगीन प्रभाव र स्रष्टाको मनोलोकीय यथार्थ इतिहास दर्शनप्रति प्रतिबद्ध हुन्छ । यसको मतलव साहित्यको इतिहास लेख्दा समालोचकीय हावी हुनु भएन, इतिहासका पक्षहरु हावी हुनुपर्छ । अन्यथा साहित्यको इतिहास नभएर साहित्य समालोचना हुने खतरा हुन्छ ।

### ३.२.२ साहित्य इतिहास लेखनका आधारभूत तत्त्वहरु

साहित्यको इतिहास लेख्नु भनेको पनि इतिहास लेखन कार्य नै हो भन्ने कुरा स्पष्ट भइसकेको छ । तर पनि साहित्यको इतिहास लेख्दा सामान्य इतिहास लेख्दा पालन हुने आधारभूत तत्त्वहरु जस्ताको तस्तै प्रयोग हुँदैनन् । सान्दर्भिकताका आधारमा साहित्य इतिहास लेखनका लागि नभइ नहुने आधारभूत तत्त्वहरु यस प्रकार छन्ः (क) कालविभाजन, (ख) कार्य–कारण सम्बन्ध, (ग) जीवनी, र (घ) विविध ।

#### (क) कालविभाजन

समय खण्डखण्ड भएर अगाडि बढ्दछ ? समय गते, महिना, वर्ष, दशक, शताब्दीजस्ता अंशमा प्राकृतिक रूपमा नै विभाजित भएको हुन्छ त ? हामी मिनेट, घण्टा, दिन, महिना आदि समयमा बाँधिएका यो युगमा मानिसको दिमागमा 'होइन' भन्ने जवाफ विरलै आउला । तर सत्य यही हो अर्थात्

समय खण्डित हुँदैन अखण्डित हुन्छ । समयको विभाजन मानिसले आफ्नो अनुकूलता र सजिलोको लागि गरेको हो । यसको तात्पर्य हो सैद्धान्तिक रूपमा समय वा काल अखण्डित हुन्छ, व्यवहारिक प्रयोजनको लागि मानिसले समयलाई विभाजन गर्दछ । सामान्य इतिहास तथा साहित्य इतिहास लेखनको क्रममा व्यवहारिक सहजताका लागि काल विभाजन गर्ने प्रचलन रहिआएको हो । कुनै पनि भाषाको साहित्यिक जीवनरूपी नदीमा ठुलो घटनाहरू घटेमा या त्यो साहित्यले विशेष समयमा विशिष्ठ विशेषता ग्रहण गरेमा वा व्यापक परिवर्तन आएमा तिनको आधारमा कालविभाजन गर्ने समान्य परम्परा नै बनेको छ । यसरी कालविभाजन गर्ने प्रचलन पनि विभिन्न देश र परिवेशमा फरकफरक रहेको पाइन्छ । विश्वमा प्रचलित केही कालविभाजनका तरिकाहरू यस प्रकार रहेको पाइन्छः

- ❑ शताब्दी : २० औँ शताब्दी, २१ औँ शताब्दी आदि ।
- ❑ राजनैतिक घटना : राणा काल, प्रजातान्त्रिक काल, गणतान्त्रिक काल आदि ।
- ❑ शासक वर्ग : पृथ्वीनारायण काल, एलिजाबेथ काल आदि ।
- ❑ कला इतिहास : पुनरजागरण, गोथिक आदि ।
- ❑ साहित्य : प्रयोगवादी, प्रतीवादी, स्वछन्दवादी आदि ।
- ❑ स्रष्टा विशेष : देवकोटा युग, सिद्धिचरण युग आदि ।
- ❑ त्रिकालिक अवधारण : प्राथमिक, माध्यमिक र आधुनिक ।

साहित्य इतिहासको कालविभाजन गर्दा विशुद्ध रूपले साहित्यकै आधार लिइनु पर्दछ । मानवीय क्रियकलापअन्तरगत राजनीतिक, सामाजिक, सांस्कृतिक आदिको प्रभाव साहित्यमा पर्ने भए तापनि कालविभाजनको क्रममा कालको नामकरण गर्दा अवश्यमेव युगीन साहित्यिक प्रवृत्तिको सार प्रतिबिम्बित हुने भाषाशास्त्रीय पदावली चलाउनु सर्वथा उचित हुन्छ।

### (ख) कार्य-कारण सम्बन्ध

ई.एच्. कार (E.H. Carr)का अनुसार "इतिहासको अध्ययन गर्नुभनेको कारणहरूको अध्ययन गर्नु हो" (The study of history is a study of causes) । यस भनाइको तात्पर्य हो कि इतिहास भनेको कारणहरूको खोजी हो ।

इतिहासका कुनै पनि घटना विनाकारण घट्दैन । घटित घटनाको कारणको रूपमा प्राकृतिक, भौगोलिक, राजनैतिक, सामाजिक, धार्मिक, सांस्कृतिक, नैतिक, जातीय आदि कारणहरू हुन सक्दछन् । इतिहासका कुनै घटना घट्नको लागि एकभन्दा बढी कारणहरूले काम गरेको हुन सक्दछन् । त्यस अवस्थामा ती कारणहरूमध्ये सबैभन्दा महत्त्वपूर्ण भूमिका कुन कारणको रहयो भनी सबै घटनाहरूको मूल्य वा महत्त्वको पहिचान गर्नुपर्छ र सबैभन्दा प्रवल कारण पत्ता लागेपछि मात्र ऐतिहाकि घटनाको सार्थकता स्पष्ट हुन्छ । इतिहासको सही लेखनका लागि कार्य – कारणको सम्बन्धको सही पहिचान हुनुपर्छ । साहित्यको इतिहास लेख्ने सन्दर्भमा पनि यही कुरा लागू हुन्छ । साहित्यमा भाव, अनुभूति, संवेग, संवेदनाजस्ता अमूर्त पक्षहरूले पनि काम गरेका हुन्छन् । त्यसैले साहित्यको इतिहास लेख्दा अमूर्त पक्षको प्रभावबाट बचेर ऐतिहासिक महत्त्व राख्ने कार्य र त्यसको कारणमात्र उतार्नुपर्दछ ।

### ग) जीवनी

१८ औँ शताब्दीको जस्तो अब राजामहाराजाहरूको इतिहास मात्रै इतिहास होइन । यद्यपि महान् काम गर्ने व्यक्तिहरू इतिहासका अविस्मरणीय र अनिवार्य पात्रका रूपमा रहने गर्दछन् । साहित्यको इतिहास लेख्दा पनि साहित्यिक क्षेत्रमा अतुलनीय योगदान पुऱ्याउने ती महान् साहित्यकारहरूको अवश्यमेव महत्पूर्ण भूमिका रहन्छ । वास्तवमा महान् व्यक्तिहरूको विचार र व्यवहारले नै युगले नयाँ कोल्टो फेर्ने गर्दछ । यसर्थ पनि साहित्यको इतिहास लेखनमा महान् साहित्यकारहरूको जीवनीको विशेष महत्त्व हुने कुरामा दुईमत छैन ।

### (घ) विविध

साहित्य इतिहास लेखनको क्रममा आउने विविध पक्षहरूमा मूल्य निर्धारण र अनुकल्पना पर्दछन् । इतिहासका कुनै पनि घटनाको व्याख्या गर्दा उक्त घटना घटेको समयको परिवेश र आचारको धरातलमा टेक्नुपर्दछ । उदाहरणको रूपमा यलम्बर कालीन नेपालमा आजको जस्तो जातीय मुक्ति वा वर्गीय मुक्ति वा राष्ट्रिय मुक्तिको सन्दर्भ पटकै थिएन । त्यो समयमा

सम्भवतः गाईवस्तुको स्वामित्व वा भूस्वामित्वको सवाल अहम थियो होला । हो, यही नियम लागू हुन्छ साहित्यको इतिहास लेखन गर्ने क्रममा घटनाहरूको मूल्य निर्धारण गर्दा पनि ।

तथ्य प्रमाणबाट विचलित नभई भूतकालको यथार्थ उतार्नु इतिहासकारको दायित्व हो । सो दायित्व पूरा गर्नका लागि इतिहासकारले प्रयोग गर्ने जुक्ति वा बौद्धिक योजनालाई अनुकल्पना वा कल्पना भनिन्छ । यहाँ बुझ्नै पर्ने कुरा के छ भने इतिहासकारले गर्ने कल्पना सत्यका निम्ति हुन्छ भने एउटा साहित्यकारले गर्ने कल्पना अर्थ आउने गरी एउटा सम्बद्ध चित्र निर्माण गर्नका लागि हुन्छ ।

### ३.२.३ साहित्य इतिहासका पद्धतिहरू

सामान्य इतिहास लेख्दा निश्चित पद्धतिहरू अवलम्बन भएजस्तै साहित्य इतिहास लेख्दा पनि निश्चित पद्धतिहरू अबलम्बन हुन्छन् । यस क्रममा मूलतः योजना, विधि र प्रस्तुतिलाई महत्त्वपूर्ण पद्धतिको रूपमा लिइन्छन् । योजना भन्नाले साहित्यको इतिहास लेख्दा अपनाइने प्रारूपलाई बुझ्नु पर्दछ । इतिहास लेख्दा लम्बीय रूप (vertical formation) लेख्ने कि क्षितिजीय रूप (horizontal formation) लेख्ने छ भन्ने सवाल नै पद्धतिको सवाल हो । साहित्यको कुनै पनि विधाको अगलअलग रूपमा क्रमबद्ध इतिहास लेखिन्छ भने त्यसलाई नै लम्ब रूपमो साहित्य इतिहास भनिन्छ । यसको ठीक विपरीत एउटा विधासँग अन्य विधाहरू पनि सबै आधारभूत पक्षहरूको तुलनात्मक अध्ययन गरिन्छ भने त्यसलाई क्षितिजीय रूपको साहित्य इतिहास लेखन भनिन्छ । यसपछि लेखिने इतिहासको प्रकार पनि खुट्याउनु अनिवार्य हुन्छ । जस्तै आकृतिमूल इतिहास (Outline History), विवरणात्मक इतिहास (Bibliographical History), वर्णनात्मक इतिहास (Descriptive History) र आलोचनात्मक इतिहास (Critical History) ।

साहित्य इतिहास लेखन विधि भन्नाले के कस्तो तरिका अपनाएर साहित्य इतिहास लेख्ने भन्ने अर्थमा बुझ्नु पर्दछ । यसरी नै प्रस्तुति पदावलीले इतिहास लेखनको पद्धति, विधि फरक भए पनि इतिहास साहित्यजस्तो नभएर इतिहास जस्तै हुनपर्छ भन्ने तर्कलाई पुट दिन्छ ।

### ३.३ लिम्बु साहित्य के हो ?

कस्तो साहित्यलाई लिम्बु साहित्य भन्ने ? यो एउटा दुविधाजनक प्रश्न हो । किन भने लिम्बु साहित्यकारहरूले आफ्नो मातृभाषामा भन्दा अन्यभाषामा सबैभन्दा बढी साहित्य लेखेका छन् । लिम्बु साहित्यकारले आफ्नै लिम्बु सामाजिक परिवेशका विषयवस्तुमा केन्द्रित भएर पनि अन्य भाषामा साहित्य लेखेका छन् भने अन्य सामाजिक परिवेशका विषयवस्तुका आधारमा अन्य भाषामा नै पनि साहित्य लेखेका छन् । यसरी नै अन्य जातिका लेखकले लिम्बु विषयवस्तु र भाषामा साहित्य लेखेका छन् भने लिम्बु विषयवस्तु तर लिम्बु इतर भाषामा पनि साहित्य लेखेका छन् ।

लिम्बु साहित्य हुनका लागि लिम्बु भाषी लिम्बुले भाषा मै लेख्नुपर्छ त ? अथवा गैह्र लिम्बु भाषी जातिले लिम्बु भाषामा लेखेको साहित्य पनि लिम्बु साहित्य हुन्छ ? लिम्बु वा ग्रैह्रलिम्बु जसले लेखेको भए पनि लिम्बु भाषामा लेखिएको साहित्य आधारभूत रूपमा लिम्बु साहित्य हो । लिम्बु भाषीले लिम्बु भाषामा र लिम्बु विषयवस्तुमाथि नै साहित्य रचना गरेमा त्यो पक्कै पनि आदर्श लिम्बु साहित्य हुनेछ । ❑

## अध्याय-४

# लिम्बु साहित्यको इतिहास लेखन परम्परा

यस खण्डमा लिम्बु साहित्यको इतिहास लेखन परम्परा, लिम्बु साहित्यको कालविभाजनका लागि भएका प्रयासहरु र लिम्बु साहित्यका काल र सोही कालअन्तर्गतका साहित्य, साहित्यकार र तिनको विशेषता बारेमा चर्चा गरिने छ ।

### ४.१.१ पृष्ठभूमि

किरात लिम्बु भाषा र साहित्य किरात लिपिमा नै लेखिएको सामग्री त्येअङ्सी सिरिजङ्गा (सन् १७०४-१७४१) कालदेखि मात्र पाइन्छ । किरात लिम्बु साहित्यको इतिहास लेखी पुस्तकाकारमा नै प्रकाशित गर्ने श्रेय इमानसिंह चेम्जोङ्लाई नै जान्छ । यद्यपि लिम्बु भाषा साहित्यको लेखन परम्पराबारेमा पहिलो पटक लेख्ने जस भेन्सिटाटलाई दिँदा न्यायसङ्गत नै हुन्छ । किनभने उनले आफ्नो पुस्तक गुर्खाज (पृ. ९९ देखि १२७) मा किरात लिम्बुहरूको इतिहास, भाषा, लिपि, साहित्य, संस्कृति आदिबारेमा चर्चा गरेका छन् । पछिल्लो समयमा आएर वैरागी काइँला, बी.बी. मुरिङ्ला, विरही काइँला, थाम्सुहाङ् पुष्प सुब्बा, लाल-श्याँकारेलु रापचा आदि हुँदै लिम्बु साहित्यको इतिहास लेखनको परम्परा अगाडि बढे पनि त्यसको पूर्वाधार खडा गर्ने काम इमानसिंह चेम्जोङ्ले गरेको तथ्य जगजाहेर नै छ ।

### ४.१.२ इतिहास लेखनको प्रारम्भ र विकास

भाषा साहित्यको इतिहास लेखनको लागि पहिला त भाषा र साहित्यको बारेमा जागरूक लेखक र रचनाकारहरूले प्रसस्त लेख, रचना र ग्रन्थहरु लेखेको हुनुपर्दछ । भाषा तथा साहित्य लेखनको लागि उत्प्रेरित गर्ने वातावरण छ कि दमन गर्ने, सम्बन्धित समाजमा साहित्यप्रतिको अनुराग

कस्तो छ ? आदि विषयले पनि साहित्य लेखनमा प्रभाव एवम् असर पार्दछ । लिम्बु भाषा साहित्यको इतिहास र सोको लेखनको विषय उप्काउँदा पनि यही सर्वमान्य मान्यता लागू हुन्छ । लिम्बु भाषा राज्यको मुख्य भाषा भएको विरलै इतिहास छ । यसले बारम्बार राज्यको मार खप्नु पऱ्यो । तर पनि लिम्बु समुदायका युगपुरूषहरूले यसको संरक्षण र विकासमा अमूल्य योगदान गरेका छन् । उनै युगपुरूषहरूले भाषा साहित्यबारेमा गरेको पुनित कार्यको चर्चा स्वदेशी तथा विदेशी विद्वान्हरूले मूल्याङ्कन गरी लेखेका छन् ।

कर्नेल कर्कपेर्टिक सन् १७९३ मा नेपालमा आउँदा उनले लेखेको किताब 'ACCOUNT OF THE KINGDOM OF NEPAUL' सन् १८११ मा लन्डनबाट प्रकाशित भयो । सो किताबमा तत्कालीन नेपालमा लेखन परम्परा भएका र अन्य भाषाहरूको नमुना शब्दहरु सङ्कलन गर्दा उनले ६३ वटा लिम्बु शब्दहरु (पृ. २४९ देखि २५२) सङ्कलन गरेको पाइन्छ ।

सन् १९०६ मा छापिएको इडेन भेन्सिटाट (EDEN VANSITTART) ले लिम्बु भाषा साहित्यको लेखन परम्पराबारेमा आफ्नो किताव गर्खाज (GURKHAS) मा यसरी उल्लेख गरेका छन्ः ...Srijanga taught the Limbus the art of writing by inventing a kind of character.

(...श्रीजङ्गाले एक प्रकारको लिपि पत्ता लगाएर लिम्बुहरूलाई लेखन कला सिकाए ।)

"Tradition says that Marang Raja was the first man who introduced writning among them..." (परम्पराबाट यो स्पष्ट हुन्छ कि तिनीहरु (लिम्बुहरु) माफ लेखन परम्परा सुरू गर्ने प्रथम व्यक्ति माराङ् राजा थिए ।) (पृ. १०५)

लिम्बु भाषा साहित्यको लेखन परम्पराको चर्चा गर्दा मानसिंह चेम्जोङ्को नाम अग्रणी स्थानमा आउँदछ । उनले सन् १९४८ (वि.सं. २००५) मा प्रकाशन गरेको किरात इतिहास नामक पुस्तकमा माराङ्हाङ् अर्थात् माराहाङ् राजा (सातौँ शताब्दीको मध्य) ले *किरात प्रदेशमा एक प्रकारको अक्षर बनाई*

*विद्या प्रचार गरे* (पृ. २४) भनिएको छ । उक्त पुस्तकमा माराङ्हाङ्पछि मकवान स्यान राजा भए र उनको समयमा *शास्त्र पढ्दा* साथै *किरात अक्षर पढ्नुपर्दा पनि 'ओम् नाम सिद्धम् – का, पा, आ, मा, ता, या, था, ना,'* (पृ. २४, २५) भनी पढिने परम्परा रहेको कुरा इतिहासकार चेम्जोङ्ले उल्लेख गरेका छन् । सोही पुस्तकमा नै श्रीजङ्गा हाङ्ले आफ्ना सारा राज्यमा पाठशाला खोली आफूले शिलालेखमा पाएको लिपिको माध्यमबाट विद्या प्रचार (पृ. २५) गरेको कुरा उल्लेख गएको छ ।

इमानसिंह चेम्जोङ्द्वारा लिखित **किरात साहित्यको इतिहास** (सन् १९५६ अर्थात् वि.सं. २०१३) लिम्बु साहित्यको इतिहास लेखनको कोसेढुङ्गा सावित भएको छ । सोही पुस्तकमा *...येहाङ्ले ...ईश्वरको उपासना गरे... ज्ञान बक्सियोस् भनी बिन्ती गर्दा परमात्माबाट उनलाई छालामा लेखेको धर्मशास्त्र बक्सियो औ उनलाई शास्त्र पढ्ने ज्ञान पनि बक्सियो । उनले सर्बप्रथम किरात वंशमा पढ्न लेख्न सिकाए । यस पुस्तकलाई माङ् साप्ला भन्दछन् अर्थात् देवताले दिएको ग्रन्थ । माङ्साप्ला किरात जातिको धर्मशास्त्र हो ...।* भनी उल्लेख भएको छ । यस पुस्तकमा किरात लिपिको विकास पर्सियाको खाडीका सौमर जातिले विकास गरेको लिपिबाट भएको, बेबिलोनका लिपिको समिश्रण रहेको, इसाको नवौँ शताब्दीमा सिरिजङ्गा हाङ्ले शिलालेखमार्फत् किरात लिपि पत्ता लगाई विद्या प्रचार गरेको चर्चा भएको छ । राजा सिरिजङ्गाले आफ्ना जनताहरूलाई सिकाएको लिपिमा साना ठुला गरेर २० अक्षर भएको, तिनको उच्चारण आकारान्त भएको, मात्रा १० प्रकारको भएको उल्लेख गरिएको छ । कालान्तरमा सो लिपि लोप भई करिब एक हजार वर्षपछि ताप्लेजुङको याङवारक थुममा जन्मिएका त्येअङ्सी सिरिजङ्गा (सन् १७०४ – १७४१) ले उक्त लिपिको फेरि प्रचार गरेका थिए । किरात लिपि र मुन्धुम्को प्रचार प्रसार गर्ने क्रममा उनलाई तत्कालीन सिक्किम मुलुकका ठासाङ लामाहरूले पत्री बिखालु काँडले हानी निर्मम हत्या गरियो र फेरि दुई सय वर्ष (करिब १८४ वर्ष) जति किरात लिपि र लिखित मुन्धुम्हरू विलुप्त भएको तर सन् १९२५ मा कालिम्पोङ डोङेग्रा वस्तीमा **याक्थुङ् हाङ् चुम्लुङ्** गठन भएपछि किरात लिपि र लिम्बु भाषा साहित्य

लेखनले फेरि जीवन पाएको इतिहास **किरात साहित्यको इतिहास**मा उल्लेख भएको छ । एवम्रीतले सन् १९५५ सम्ममा किरात लिपिको प्रयोग, विकास, साहित्य लेखन आदिको सिलसिलाबद्ध विवेचना सो पुस्तकमा गरिएको भए पनि यसमा लिम्बु साहित्यको कालविभाजनको कुनै अनुकल्पना वा निर्धारण गरिएको पाइन्न । यो कृतिको सुरूमा लेखकले किरात लिम्बु साहित्यको प्राग इतिहासकाल पहिल्याउने प्रयास गरेका छन् भने पछिल्लो चरणमा किरात लिम्बु भाषा साहित्यको तथ्यगत इतिहासलाई पर्गेल्ने काम गरेका छन् ।

सुब्बा खड्गबहादुर नेम्बाङ् लिखित **किराँत मिक्–हऽन् साम्लो** (वि.सं.२०१२) नामक गीति काव्यको भूमिका लेख्ने क्रममा साहित्यकार काजीमान कन्दङ्वाले प्रस्तुत पुस्तक (किराँत मिक्–हऽन् साम्लो) किराँती भाषा (लिम्बु) मा लेखिएको कविता हो । *...किरात भाषामा कविता लेखिएको पहिलो (सृजनात्मक) पुस्तक यही नै हो...* भनी उल्लेख गरेका छन् ।

वि.सं. २०४६ (सन् १९८९) मा बी.बी. मुरिङलाले **सोधुङ्गेनहा?रे सिवादिङ् खाहुन्** (महात्माहरूको उपदेशहरू) नामक कृति लेखे । उक्त पुस्तकमा लिम्बु समाजमा प्रचलित मुन्धुम्का स्रष्टा मानिएका येहाङ्देखि समाजसुधारक फाल्गुनन्दसम्मका जीवनी र उनीहरूको लोकप्रचलित उपदेश र अन्य रचनाहरु समावेश गरिएका छन् । यसले मुख्यगरी लिम्बु साहित्यको शास्त्रीयतावादी युग र भक्तिकालीन समयका स्रष्टा र साहित्यको सन्दर्भलाई उजागर गर्ने कार्यमा सगाउ पुऱ्याएको छ ।

किरात लिम्बु साहित्यको इतिहाससम्बन्धी लेख लेख्ने क्रममा वैरागी काइँलाले प्रज्ञा प्रतिष्ठानले प्रकाशित गरेको पत्रिका समकालीन साहित्य (वि.सं. २०४९, साउन – असोज) मा **किराँत लिम्बु भाषा र साहित्यको विकासक्रमको छोटो परिचय** शीषर्कको लेख लेखी प्रकाशित गराएका थिए । उक्त लेख सिरिजङ्गा हाङ्ले नवौँ शताब्दीमा लिपि पत्ता लगाई लेख्न र लेखाउन थालेको घटना विन्दुबाट आरम्भ गरी वि.सं. २०४८ मा तत्कालीन ने.रा.प्र.प्र. प्रकाशित गरेको साप्पोक् चोमेन् (लिम्बु जातिमा कोखपूजा) सम्मको विवरण लेखकले समेटेका छन् । यो लेखमा लेखकले

लिम्बु भाषा साहित्यको लेखनमा समर्पित एवम् उत्प्रेरक स्वजातीय स्वदेशी (त्येअङ्सी सिरिजङ्गा, इमानसिंह चेम्जोङ्, बाजबीर थलङ, फाल्गुनन्द लिङ्देन, काजीमान कन्दङ्वा, खड्गबहादुर नेम्बाङ्, पदमसिंह मुरिङ्ला आदि) तथा विदेशी (बी. एच्. हज्सन, कर्कपेट्रिक, हयामिल्टन, केम्पबेल, आर.के. स्प्रिग आदि) विद्वान्हरूको पनि क्रमबद्ध चर्चा परिचर्चा गरिएको छ । वि.सं.२००७ साल पूर्व भएका भाषा साहित्यको विकासका प्रयासहरू, सात सालमा प्रजातन्त्र स्थापनाले लिम्बु भाषा साहित्यको विकासमा ल्याएको उत्साह, मुलुक बाहिर मूलतः सिक्किम र दार्जिलिङमा भएका प्रयास र प्रगतिका नालीबेली, फाल्गुनन्दसँगै उदाएको सन्त साहित्य अभियान, विधागत साहित्य लेखनको विवरण, लिम्बु पत्रकारिताको विकासक्रम आदिको संक्षेपमा यस लेखमा चर्चा भएको पाइन्छ । यस लेखले इमानसिंह चेम्जोङ् लिखित **किरात साहित्यको इतिहास** (सन् १९५६) पछि लिम्बु भाषा साहित्य लेखनमा भएका विकासलाई पनि सिलसिलेवार ढङ्गले समेटेको छ । यस लेखले लिम्बु साहित्यको काल विभाजनको छिटफुट सङ्केत गरेको छ ।

इमानसिंह चेम्जोङ् लिखित **किरात साहित्यको इतिहास**पछि पुस्तकाकार कृतिको रूपमा विरही काइँलाकृत **लिम्बु भाषा र साहित्यको सङ्क्षिप्त परिचय** नामक कृति तत्कालीन नेपाल राजकीय प्रज्ञा–प्रतिष्ठानबाट २०४९ भदौमा प्रकाशित भयो । यो पुस्तक किरात लिम्बु भाषाको परिचय दिने भाषा खण्डबाट सुरू भई विधागत परिचय, उखान, पत्रपत्रिकाहरू र लिम्बु (साहित्यिक) रचनावली गरी पाँच खण्डमा लेखिएको छ ।

पहिलो खण्डमा किरात लिम्बु भाषाको अनुवंश, किरात लिपिको क्रमबद्ध विकासक्रम र प्रयोग, लिम्बु भाषाअनुसार किरात लिपिको स्वरवर्ण र व्यञ्जन वर्णको लेखनपद्धति, लिम्बु भाषाको ध्वनिगत विशेषताको चर्चा भएको छ ।

लिम्बु शब्दको उत्पत्ति, लो–मेन–त्सोङ सुम, लिम्बु जाति बसोबास रहेको राजनैतिक भूगोगमा आएको उत्तारचढाव र त्यसको प्रभाव, त्येअङ्सी सिरिजङ्गा, विदेशी विद्वान्हरूले लिम्बु जाति, भाषा, लिपि बारेमा गरेका खोजकार्यहरू, स्वभाषीय चेतनाअन्तर्गत आफ्नो जातीय अस्तित्व, भाषा, लिपि आदिलाई

राज्यबाट मान्यता दिलाउनको लागि भएका प्रयासहरू दोस्रो खण्डको पूर्वभागको रूपमा प्रस्तुत गरिएको छ । यही खण्डमा सिक्किममा लिम्बु भाषा विषयको रूपमा कक्षा १ देखि १२ औँ कक्षासम्म पठनपाठन हुने पाठ्यपुस्तकको विवरण पनि उल्लेख छ भने विभिन्न लेखकहरू र उनीहरूले लेखेका कृतिहरूको विवरण पनि समेटिएको छ । यसपछि विधागत साहित्यअन्तर्गत लोक साहित्य, कविता, उपन्यास, कथा, जीवनी, नाटक, एकाङ्की, निबन्ध, अन्तरवार्ता, पत्रपत्रिकाबारेमा चर्चा गरिएका छन् । सिरिजङ्गा (त्येअङ्सी) को समयदेखि कविता विधाको प्रारम्भिक काल सुरू भएर सन्त फाल्गुनन्द लिङ्देनको समयमा यसले उत्कर्ष रूप लिएको उल्लेख गरिएको छ भने खड्गबहादुर नेम्बाङ्को **किराँत मिक्–हऽन साम्लो** ले आधुनिक दिशा लिएको उल्लेख भएको छ । यसरी नै पहिलो लिम्बु भाषाको कथाको रूपमा जोभानसिंह लिम्बुले लेखेका **याक्थुङ्बाहाङ् मुन्धुम्** हो भनी पहिचान गरिएको छ भने लिम्बु कथा लेखनको आधुनिक काल काजीमान कन्दङ्वाको **कारबार** (वि.सं. २०१८) बाट सुरू भएको मानिएको छ । बाँकी विधाका पहिलो रचना वा कृतिको चर्चा गरिएको पाइए पनि कालविभाजन गरिएको छैन । यही खण्डको अन्त्यमा डेढ दर्जनभन्दा बढी स्थापित लिम्बु लेखकहरूको सङ्क्षिप्त जीवनी प्रस्तुत गरिएको छ ।

खण्ड तीनमा लिम्बु समाजमा प्रचलित उखानको उल्लेख पाइन्छ भने खण्ड चारमा लिम्बु भाषाको प्रथम पत्रिका कोम (अगस्ट १९६७) देखि आपसोक (सन् १९९१) सम्मका दर्जनौँ पत्रिका र तिनका विषयवस्तु प्रस्तुत गरिएका छन् ।

पाँचौँ खण्डमा काजीमान कन्दङ्वा र बी.बी. सुब्बाका कथा, पदमसिंह मुरिङ्लाद्वारा लिखित इमानसिंह चेम्जोङ्को जीवनी, येहाङ् लावती र मोहन इजमद्वारा लिखित क्रमशः यासोक हाम्रो तीर्थस्थल र समयले पर्खँदैन निबन्धहरू, फाल्गुनन्द लिङ्देन, बाजवीर थलङ, खड्गबहादुर नेम्बाङ्, येहाङ् लाओती, वीर नेम्बाङ्, थाम्सुहाङ् पुष्प सुब्बा, बी.बी. मुरिङ्ला, फुरूम्बो मोहनप्रसाद सुब्बा, बिरही काइँला, ऐतमान सुब्बा, के. एस. सुब्बा, चन्द्र माङ्युङ र वैरागी काइँलाका कविता समेटिएका छन् ।

यस पुस्तकमा लिम्बु साहित्यको काल विभाजनको केही छनक दिइएको भए पनि त्यसमा ध्यान केन्द्रित गरी त्यसबारेमा निर्णायक चर्चा गरिएको पाइँदैन । यो कृति लिम्बु भाषा, साहित्यको परिचय दिन र विवरणात्मक जानकारी प्रदान गर्न तयार गरिएको हो । यस पुस्तकमा लिम्बु जातिको भाषिक, साहित्यिक पक्षका साथै राजनैतिक अवस्थासमेतको चर्चा गरिएको छ । यसअघि लेखिएका लिम्बु भाषा साहित्यसम्बन्धी लेख र पुस्तकहरूमा प्रायःजसो किरात शब्द लिम्बु शब्दसँग जोडेर लेख्ने गरिन्थ्यो भने यस पुस्तकमा त्यो परम्परा छोडिएको पाइन्छ ।

पछिल्लो समयमा आएर लिम्बु साहित्यलाई वैचारिक आधारमा पनि मूल्याङ्कन गर्ने परम्परा आरम्भ भयो । लिम्बु भाषा र साहित्यको विकासक्रमलाई खुट्याउन कार्यपत्रहरू लेख्ने क्रम पनि छिटफुट रूपमा चल्ने क्रम अगाडि बढ्यो । यही क्रमको एउटा कडीको रूपमा २०५८ साउन १२ गते **लिम्बु भाषामा प्रगतिशील साहित्यको सङ्क्षिप्त रेखाङ्कन** विषयमा एउटा कार्यशाला गोष्ठी भएको थियो । उक्त कार्यशाला गोष्ठीमा विजय सुब्बाले कार्यपत्र प्रस्तुत गरी लिम्बु साहित्यकारहरूको रचनापक्षलाई प्रगतिशील दृष्टिकोणले हेर्ने प्रयास गरे । यस कार्यपत्रमा कोको लिम्बु साहित्यकारका कुनकुन रचनाहरू केकति प्रगतिशील छन् भन्ने लेखाजोखा गर्ने प्रयास गर्दागर्दै पनि लिम्बु भाषा साहित्यको मूल प्रवृति अन्तर्गत काल विभाजन गरिएको छ । त्येअङ्सी सिरिजङ्गादेखि फाल्गुनन्दसम्मको अध्यात्मवादी लेखनधारालाई भक्तिकाल भनियो भने यसैलाई प्रारम्भिक काल पनि मानिएको छ । यसरी नै इमानसिंह चेम्जोङ् कालमा लेखिएको लिम्बु साहित्य मूलतः अध्यात्मवादी र यथार्थवादी भएर पनि जागरण साहित्य मानिएको छ र यसैलाई माध्यमिक काल मानिएको छ । वि.सं. २०३० पछिको लिम्बु साहित्यलाई आधुनिक मानिएको छ र यसलाई पनि अघिल्लो चरण र पछिल्लो चरण भनी विभाजन गरिएको छ । यहाँ अघिल्लो चरण भन्नाले वि.सं. २०३० देखि २०४६ सम्मको समयसीमालाई मानिएको छ । यो समयमा जातीय असमानता विरूद्धको भावना र शोषण विरूद्धको भावना साहित्यमा बढीमात्रामा उजागर भएको र यो यथार्थवादी किसिमको भएको विश्लेषण गरिएको छ । वि.सं. २०४६

पछि रचिएका लिम्बु साहित्यलाई पछिल्लो चरणको साहित्य भनी किटान गर्ने प्रयास गरिएको छ । यस प्रकारको साहित्य जातीय र वर्गीय शोषणविरूद्धको भावना अभिव्यक्त भएको यथार्थवादी र प्रगतिशील साहित्यको कोटीमा राखिएको छ । अपेक्षित रूपमा सूक्ष्म विश्लेषण हुन नसके पनि यस कार्यपत्रले लिम्बु भाषाका साहित्यकार र उनीहरूको रचनालाई प्रगतिशील दृष्टिकोणबाट मूल्याङ्कन गर्ने परम्पराको थालनी गऱ्यो ।

लिम्बु भाषा र साहित्यको इतिहासमाथि लेखिएको अर्को कृतिको नाम हो– **लिम्बु भाषाः साहित्यिक श्रष्टा र दृष्टिकोण** । थाम्सुहाङ् पुष्प सुब्बाले यस पुस्तकको छोटकरी स्वरूप वि.सं. २०५७ तिरै तयार गरेको र त्यसैलाई पछि वि.सं. २०५९ तिर विस्तृत रूप दिई वि.सं. २०६१ असारतिर प्रकाशन गरेको पाइन्छ । यस पुस्तकमा लिम्बु भाषा, साहित्यिक श्रष्टा, लिम्बु साहित्यको सङ्क्षिप्त रूप–रेखा, लिपिको आलेखन तथा दृष्टिकोणसहित पाँच खण्ड राखिएको छ ।

प्रथम खण्डमा लिम्बु भाषाको परिचय सहित यसका चार भाषिका बारेमा चर्चा गरिएको छ । दोस्रो अर्थात् साहित्यिक श्रष्टा खण्डमा लिम्बु भाषाका श्रष्टाहरू थुङ्साप् मुन्धुम् (श्रुति साहित्य) र पेसाप् मुन्धुम् (लेख्य साहित्य) का श्रष्टाका रूपमा प्रस्तुत गरिएका छन् । लिम्बु समाजमा आदिकालदेखि आजतक प्रचलनमा रहेका विभिन्न मुन्धुम्का स्रष्टाका रूपमा सावा येत्हाङ्, सोधुङ्गेन् लेप्मुहाङ्, कान्देन्हाङ्, माबोहाङ्, सिरिजङगा हाङ् हुँदै त्येअङ्सी सिरिजङ्गासम्मका स्रष्टाहरूको लोक प्रचलित केही उपदेशात्मक पङ्क्तिसहित ती स्रष्टाहरूलाई प्रस्तुत गरिएका छन् । त्यसपछि जागरण र मुन्धुमी स्रष्टाहरू भनेर इमानसिंह चेम्जोङ्, कृष्णबहादुर लावती, रनधोज नेम्बाङ्, खड्गबहादुर नेम्बाङ्, सिरिधोज लङ्वा, जसहाङ् मादेन आदि स्रष्टा र उनीहरूको रचनाधर्मिताको वर्णन गरिएका छन् । यसरी नै सिक्किमे लिम्बु स्रष्टाहरू भनी चन्द्र माङ्युङ, बी.बी. मुरिङ्ला, पी.एस्. मुरिङ्ला, आर.बी. सुब्बा याक्थुङ्चुम् उल्लेख छ भने नेपालका स्रष्टाका रूपमा थाम्सुहाङ् पुष्प सुब्बा, रणबहादुर मेन्याङबो, येहाङ् लावती आदिको विवरण प्रस्तुत गर्दै लिम्बु पत्रकारहरूको पनि प्रसङ्ग उल्लेख गरिएको छ ।

**लिम्बु साहित्यको सङ्क्षिप्त रूप-रेखा** शीर्षकमा लिम्बु साहित्यको समग्र इतिहासलाई विभिन्न कालखण्डमा विभाजन गरी हेर्ने प्रयास गरेको देखिन्छ । लिम्बु समाजमा मुन्धुम्का विभिन्न आयामका रूपमा रहेका श्रुति परम्परालाई लिम्बु साहित्यको अज्ञात स्वर्णिम काल नामकरण गर्दै मुन्धुम्को रचना काल नै लिम्बु साहित्यको काव्य विधाको स्वर्णिम काल मान्नु पर्ने जिकिर लेखकले गरेका छन् । यसमा लोक साहित्यको रूपमा रहेको नुवाप्मा (बाललोरी) को सम्भावित स्रष्टा लाहादङ्ना, च्याब्रुङ् नाँच्दा गाइने गीत केसाम्को स्रष्टा पाजाइबा, ताम्के र पालाम्को स्रष्टा सरक्पालाई प्रथम स्रष्टा मान्नु पर्ने मत पनि प्रस्तावित छ । वि.सं. ७००–१००० सम्मलाई प्रारम्भिक काल, वि.सं. १७६१–२०११ सम्मको अवधिलाई लिम्बु साहित्यको उत्थान काल र वि.सं. २०१२–२०२८ सम्मको अवधिलाई विकास कालका रूपमा उल्लेख गरिएको छ । सिरिजङ्गा पत्रिकाको प्रकाशनलाई आधार मानेर लिम्बु साहित्यको आधुनिक काल आरम्भ भएको २०४६ पछि लेखिएका लिम्बु साहित्य आधुनिकोत्तर उन्मुख रहेको प्रसङ्ग राखिएको छ ।

प्रस्तुत पुस्तकमा लिम्बु साहित्यलाई स्रष्टाहरूको कोणबाट हेर्ने जमर्को गरिएको छ । यो पक्ष यस पुस्तकको सर्वथा राम्रो पक्ष हो । यसमा काल विभाजनको आधारहरू प्रस्तुत गरिएका छन् जसले काल विभाजनका लागि अनुमानभन्दा पनि तर्क आवश्यक हुन्छ भन्ने तथ्यलाई केही मात्रामा भए पनि बल पुऱ्याएको छ । प्रस्तुत विवरणहरूलाई अझ व्याख्या र विश्लेषण भएको भए जाती हुने नै थियो । कतिपय विषयमा लेखक केही मात्रामा आत्मकेन्द्रित पो भए कि भन्ने ठाउँ पनि रहन गएका छन् । यो पुस्तकले निकै नयाँ विषयहरू लिएर आए पनि वैज्ञानिक तर्कभन्दा लेखकको मत र आग्रहरू हुल बाँधेर आएको आभास मिल्दछ ।

लिम्बु भाषाको विकासमा विशेष प्राथमिकताका साथ काम गरिरहेको संस्था किरात याक्थुङ् चुम्लुङ्ले वि.सं. २०५९ पुस २५ र २६ गते विर्तामोड झापामा लिम्बुवानभरिका लिम्बु साहित्यकारहरूको भेला आयोजना गरी **याक्थुङ् साप्सक्ः हम्बुहा? नु कुबेहन्हा?** (लिम्बु साहित्यः समस्याहरू र समाधानहरू) (तान्छोप्पा साप्ताहिक अङ्क ३ र ४ २०५९ मा

प्रकाशित) नामक कार्यपत्र प्रस्तुत गरिएको थियो । अमर तुम्याहाङ् र रणबहादुर मेन्याङ्बोले संयुक्त रूपमा लेखेको त्यो कार्यपत्रले लिम्बु भाषामा लेखिएका विधागत साहित्यको सिलसिलेवार प्रस्तुति गर्नुका साथै यसको विकासमा देखिएका समस्याहरु र ती समस्याका सम्भावित समाधानहरु प्रस्तुत गरेको छ । यसले लिम्बु साहित्यको विशेषताहरूको उल्लेख गर्दै लिम्बु साहित्यले अन्य भाषाका साहित्यजस्तै समृद्ध र उत्तरोत्तर प्रगतिको पथमा रहेको निष्कर्ष निकाले पनि लिम्बु साहित्यको कालविभाजन भने कुनै चर्चा गरेको छैन ।

लिम्बु भाषा, साहित्य र लिपि प्रयोगका बारेमा विभिन्न विद्वान्हरूले चासो दिएर लेखहरु लेखेका छन् । यस्ता लेख लेख्नेहरूमध्येका मञ्जुल याक्थुम्बाले लेखेको **सिरिजङ्गाहाङ् किरात लिपिका आविष्कारक होइनन्, पुनरूत्थानकर्ता मात्र हुन्** शीर्षकको लेख तान्छोप्पा साप्ताहिकमा १२ मङ्सिर २०५९ मा प्रकाशित भयो । यस लेखले किरात लिपिको इतिहास पहिल्याउने प्रयास गरेको भए पनि यसले लिम्बु भाषा लेखनको पक्षलाई पनि सँगसँगै चर्चा गरेको छ र लिम्बु भाषा साहित्यको लेखन इतिहास हजारौँ वर्ष पुरानो भएको तर्क अगाडि सारेको छ ।

प्राज्ञ वैरागी काइँलाले **याक्थुङ् खेदा?रे कुबोरेन् चुक्मुक्पा साप्पुन्धुम्** (लिम्बु कथा विकासको सङ्क्षिप्त इतिहास) शीर्षकको लेख तान्छोप्पा साप्ताहिकमा वि.सं. २०६० असोज १ गते छापियो । यसमा लिम्बु साहित्यको कालविभाजनका साथै लिम्बु भाषामा लेखिएको कथाको तथ्यपरक विश्लेषण प्रस्तुत गरिएको छ । यस लेखमा लिम्बु भाषाका कथाकार र उनीहरूको कथाकारितालाई प्राथमिक, माध्यमिक र आधुनिक गरी तीन समूहमा विभाजन गरी प्रस्तुत गरिएको छ ।

विक्रमाब्द २०६० को दशकमा पनि लेख, कार्यपत्र, र ग्रन्थका रूपमा लिम्बु भाषा सहित्यको इतिहास लेख्ने क्रम निरन्तर अगाडि बढेको छ । वि. सं. २०६० (सन् २००४) पुसमा प्रकाशित लिम्बु भाषाको महाकाव्य **सोधुङ्गेन् इमानसिंह चोःत्लुङ्**को भूमिका लेख्ने क्रममा वैरागी काइँलाले साहित्य मूलतः लिम्बु भाषाको कविता काव्यको इतिहासबारेमा लेख्नुभएको छ–

*त्येअङ्सी सिरिजङ्गारेन् सावाःन्निन् इःन्दो युङ्माआङ् येम्मिन् अक्खेलरिक् हामा सुक्- कुबुङ्येम् या थिक्सिगेःक्पा नाःत्ला (नाजिरि १७०४-१९२४ तङ्बे), कुलुम्येम् या निसिगेःक्पा नाःत्ला (नाजिरि १७२५-१९५४ तङ्बे) हेक्याङ् कुनुम्येम् या सुम्सिगेःक्पा नाःत्ला (१९५५ नु आल्लोभक्) ।। (पृ.छ)*
(त्येअङ्सी सिरिजङ्गाको जन्मलाई आधार मानेर काललाई यसरी विभाजन गर्न सकिन्छ- प्राथमिक काल या प्रथम चरण (सन् १७०४-१९२४), माध्यमिक काल अर्थात् दोस्रो चरण (सन् १९२५-१९५४) अनि आधुनिक काल आर्थात् तेस्रो चरण (सन् १९५५ देखि हालसम्म) । यो भूमिका आलेखन विशेष गरी काव्यकेन्द्रित भए पनि यसमा प्रसङ्गवश लिम्बु साहित्यको काल विभाजनको विषयले प्रवेश पाएको छ ।

मोहन तुम्बाहाङ्द्वारा लिखित **लिम्बु साहित्यको सङ्क्षिप्त परिचय** शीर्षकको लेख तङ्सिङ पत्रिकामा वैशाख २०६१ मा प्रकाशित भयो । यो लेख लिम्बु भाषाको इतिहासलाई विभिन्न कालहरूमा विभाजन गर्न प्रयास स्वरूप लेखिएको देखिन्छ । तर यसमा लिम्बु साहित्यको प्राथमिक काल र माध्यमिक काल मात्र उल्लेख हुन पुगेको छ ।

प्राज्ञ वैरागी काइँला लिखित **लिम्बु भाषा-साहित्य र आजको लिम्बु कथा** शीर्षकको लेख वि.सं. २०६१ (सन् २००४/५) कार्तिक - चैत्रको सयपत्री पूर्णाङ्क १९ मा छापिएको छ । उक्त लेख वि.सं. २०६० (सन् २००३) मा इमानसिंह चेम्जोङ् शतवार्षिकीको उपलक्ष्यमा आयोजित कथा प्रतियोगितामा सहभागी नौ वटा कथाहरूको समीक्षा लेख हो । समालोचना लेख भएकाले प्राज्ञ वैरागी काइँलाले लिम्बु भाषाका कथाको प्रवृति, विशेषता, शैली, मनोविज्ञान आदिबारेमा सविस्तार विश्लेषण गर्ने क्रममा आमुखको रूपमा लिम्बु भाषा र साहित्यको विकासक्रमबारेमा यसरी उल्लेख गरेका छन्ः

*लिम्बु भाषा र साहित्यको चर्चालाई सुगम बनाउन लिम्बु भाषा र साहित्यको इतिहासलाई सिरिजङ्गा दोस्रोको जन्म (१९०४-१७४१ ई.) साललाई आधार मानेर तीन काल्पनिक कालखण्डमा विभाजन गर्नु उपयुक्त हुन्छ । जस्तै (१) प्राथमिक काल (१७०४-१९२४ ई.), (२) माध्यमिक काल(१९२५-*

*१९५४ ई.) र (३) आधुनिक काल (१९५५ देखि हालसम्म) । माध्यमिक र आधुनिक कालखण्डलाई त उत्तरार्द्ध र पूर्वार्ध कालखण्डमा उपविभाजन गर्दा अझ सुविधाजनक हुन्छ ।*

उक्त कथा समालोचनामा उल्लेख भएको लिम्बु भाषा साहित्यको काल विभाजन निकै तथ्यपूर्ण छ । सन् १८४२ तिर बी.एच्. हज्सनले दार्जिलिङ र सिक्किममा फेला पारेका कुहिएका कागजपत्रहरूमा त्येअङ्सी सिरिजङ्गा स्वयम्ले लेखेको हस्तलिखित सामग्रीहरु पनि लन्डनको इन्डियन लाइब्रेरीमा रहेको विश्वास गरिन्छ । यसउसले यो कालावधिदेखि किरात लिपि र लिम्बु भाषामा लेखिएका सामग्रीहरु प्राप्त हुने भएकाले यो काल विभाजनको अनुकल्पना परिकल्पनाभन्दा पनि यथार्थ भएको कुरामा कुनै दुविधा छैन । यसलाई सूक्ष्माति सूक्ष्म किसिमले मूल्याङ्कन गर्न त अवश्य पनि बाँकी नै होला । यद्यपि यो काल विभाजन तर्क सङ्गत ढङ्गले प्रथम पटक अगाडि सारिएको मान्न सकिन्छ ।

२०६२/६३ को ऐतिहासिक जनआन्दोलनपछि बदलिँदो परिस्थितिमा २०६४ फागुन ४ देखि ७ गते सम्म नेपाल प्रज्ञा प्रतिष्ठानले राष्ट्रिय साहित्य सङ्गोष्ठी-२०६४ आयोजना गऱ्यो । सो सङ्गोष्ठीमा **नेपालका भाषाहरूको वर्तमान अवस्था, नेपालका भाषाहरूको वर्तमान साहित्यिक अवस्था र समस्या, सामाजिक रूपान्तरणमा स्रष्टाहरूको भूमिका र नेपालको राष्ट्रिय संस्कृतिको स्वरूप र नीति-निर्माणको प्रश्न** जस्ता विषयहरूमा कार्यपत्र प्रस्तुत हुने क्रममा **लिम्बु भाषाको वर्तमान साहित्यिक अवस्था र समस्या विषय**मा प्राज्ञ वैरागी काइँला र अमर तुम्याहाङ्ले संयुक्त कार्यपत्र प्रस्तुत गरेका थिए । सो कार्यपत्रमा लिम्बु साहित्यको काल विभाजन, विधागत साहित्य लेखन, पत्रकारिता आदिबारेमा सविस्तार चर्चा गरिएको छ ।

लाल-श्याँकारेलु रापचा आदिले लेखेको इन्डो-नेपाल किराँती भाषाहरु नामक बृहत् ग्रन्थ सन् २००८ अर्थात् २०६५ मा प्रकाशित भयो । यस कृतिमा किराती समुदायका प्रायः सबै भाषाहरूको विगत, समाकालीन परिवेश र भविष्यका चुनौतीहरूको सविस्तार शोधपूर्ण तवरले तयार पारिएको

छ । सोही कृतिमा किराँती याक्थुङ् शीर्षकमा लिम्बु भाषी, लिम्बु भाषा, साहित्यको सविस्तार विवरण प्रस्तुत गरिएको छ ।

यसरी नै बी.बी. मुरिङ्लाले **याक्थुङ् साप्पाःन्ले मारास् तमेप्मो** (लिम्बु साहित्यको राजमार्ग खन्दा) शीर्षको कितावमा सिक्किममा लिम्बु भाषा साहित्यको विकासमा भएका निम्न प्रयास विस्तृत रूपमा चर्चा गरेका छन्ः

- सन् १९५१ मा इमानसिङ चेम्जोङ्, पदमसिंह मुरिङ्ला र मनबहादुर खाम्धाकको संयुक्त पहलमा **तुम् याक्थुङ् निङ्वाफु साप्ला** र **याक्थुङ् निसिगेक् साप्ला** प्रकाशित भएपछि त्यी पुस्तकहरूले सिक्किममा ल्याएको लिम्बु भाषा साहित्यको जागरण र औपचारिक शिक्षा यात्राको आरम्भ ।
- सिक्किममा लिम्बु भाषा विकासमा राजनीतिक प्रयास अर्थात् संसद्मा लिम्बु जातिको प्रतिनिधित्वको लागि **चोङ् सिट** या **लिम्बु सिट** प्राप्त गर्न मण्डल भर्नधोज ताम्लिङ, मण्डल तिलोकसिङ् नुगो र लालमान नुगोको नेतृत्वमा लिम्बु समुदायले गरेको प्रयास र लिम्बु भाषा साहित्यले सरकारी मान्यता पाउन त्यसले पुऱ्याएको योगदान ।
- चोङ सिट प्राप्त भएपछि चुनिएका चोङ सभासद र तिनले लिम्बु भाषालाई राज्यबाट मान्यता दिलाउन गरेको अनवरत प्रयासको इतिहास।
- सन् १९७५ अघि सिक्किममा लिम्बु भाषामा भएका सम्पूर्ण कामको लेखाजोखा ।

### ४.१.३ टुङ्ग्याउनी

लिम्बु भाषा साहित्यको इतिहास स्वदेशी तथा विदेशी विद्वान्हरूले समानान्तर रूपमा लेखेका छन् । विक्रमाब्द एकाइसौँ शताब्दीको प्रथम दशकमा इमानसिंह चेम्जोङ्को उदयसँगै किरात लिम्बु भाषा साहित्यको इतिहास लेखनले गति लियो र आजको अवस्थासम्म आइपुगेको छ ।

पछिल्लो समयमा लिम्बु भाषामा साहित्य रचनाले निकै अग्रगति लियो जसको जगमा विभिन्न विद्वान्हरूले लिम्बु साहित्यको इतिहासको महल खडा गर्दै आएका छन् । लिम्बु साहित्यको रचना लिम्बु भाषामा भन्दा खस भाषामा लेख्नेको सङ्ख्या ठुलो छ तथापि लिम्बु भाषामा नै किरात लिम्बु साहित्यको इतिहास लेख्ने लेखकहरु पनि त्यतिकै मात्रामा बढिरहेका छन् । अपेक्षित रूपले लिम्बु साहित्यले परिस्कार पाउन सकेको छैन । व्यवहार वा अभ्यासले मानिसलाई पूर्ण बनाउँछ (Practice makes a man perfecf) भने जस्तै निरन्तर प्रयासले अवश्य पूर्णता पाउने आशा गर्न सकिन्छ । ❑

# ४.२ लिम्बु साहित्यको कालविभाजन

### ४.२.१ परिचय

काल विभाजन इतिहास लेखनको सर्वमान्य मान्यता हो । यो मान्यताबाट साहित्य इतिहास लेखन पनि अछुतो रहँदैन । त्यसो हो भने लिम्बु साहित्यको काल विभाजनको सम्बन्धमा केके प्रयासहरु भए त ? यहाँ सोही लिम्बु साहित्यको कालविभाजनका लागि भएको प्रयासको चर्चा हुनेछ ।

### ४.२.२ लिम्बु साहित्यको कालविभाजन प्रयास

लिम्बु साहित्यको इतिहास लेख्ने कार्य प्रचुरमात्रामा भएको दृष्टिगोचर हुन्न । यद्यपि लिम्बु भाषा साहित्यको इतिहास लेख्ने परम्परा एक शताब्दीभन्दा लामो समयदेखि हुँदै आएको देखिन्छ । अधिकांश लेखकहरूले लिम्बु भाषाको इतिहास लेख्दा लेखक र उनीहरूले गरेका रचनाहरूको कालक्रम क्रमिक रूपमा उल्लेख गरेको पाइन्छ । निकै कम लेखकहरूले मात्रै लिम्बु साहित्यको इतिहासलाई कालविभाजनको समयसीमामा बाँध्ने काम गरेका छन् । यसरी कालविभाजनमा प्राथमिकता नदिनुमा निम्न सम्भाव्य कारणहरु छन्ः

(क) लिम्बु भाषा साहित्य शताब्दीऔँसम्म राज्यको मारमा पर्नु ।

(ख) प्रजातन्त्रोत्तर पनि लिम्बु भाषा विद्यालय र महाविद्यालयहरूमा माध्यम भाषाको रूपमा पठनपाठन नहुनु ।

(ख) लिम्बु भाषामा साहित्य रचना गर्ने प्रवृति बढे पनि गम्भीर समालोचना र इतिहास लेखनमा ध्यान नजानु आदि ।

हुन त कालविभाजन भनेको समयलाई काल्पनिक समय रेखाले छुट्याउने प्रयास मात्रै हो । समय आफ्नो अनन्त यात्रामा अविछिन्न प्रवाहित

भइरहेको हुन्छ । तापनि हामीले आफ्नो सुविधाका लागि समयलाई विभाजन गरेर व्यवहार चलाउने गर्दछौँ । यसअघि लिम्बु साहित्यको कालविभाजन त्यति जरूरी महसुस भएको थिएन । वर्तमानमा आएर लिम्बु साहित्य रचनामा आधिक्यता हुनुका साथै उच्चशिक्षामा यसको पठनपाठनको तारतम्यले गर्दा लिम्बु साहित्यको काल विभाजन अपरिहार्य भएर आएको छ । अर्को कुरा अहिले संसार एउटा विश्व ग्राममा बदलिएको कारणले पनि लेखकहरु अरु भाषाका साहित्यको इतिहासको प्रभावमा परेर लिम्बु साहित्यको कालविभाजन कार्यमा समर्पित भएका हुन् कि भनेर विश्वास गर्न सकिन्छ । तर यस्तो समयचेत भएका लेखकहरु ज्यादै न्यून भएको कुरा यहाँ चर्चा गरिरहनु परोइन ।

लिम्बु साहित्यको काल विभाजन गरेर सामूहिक चर्चाको विषय बनाउने श्रेय विजय सुब्बालाई जान्छ । उनले २०५८ साउन १२ गते प्रगतिशील लेखक सङ्घ (प्रलेस)द्वारा आयोजित गोष्ठीमा **लिम्बु भाषामा प्रगतिशील साहित्यको सङ्क्षिप्त रेखाङ्कन** विषयक एउटा कार्यपत्र पस्तुत गरे जसमा उनले लिम्बु साहित्यको मूल प्रवृत्ति उपशीषर्कमा लिम्बु साहित्यको कालविभाजनको आफ्नो अवधारणा प्रस्तुत गरेका छन् । विजय सुब्बाले प्रस्ताव गरेको कालविभाजन यसप्रकार रहेका छन्ः

**प्रारम्भिक काल**ः भक्तिकाल (सिरिजङ्गादेखि फाल्गुनन्दसम्म) अध्यात्मवाद

**आधुनिक कालः**

(क) इमानसिंह चेम्जोङ् कालः अध्यात्मवाद र यथार्थवाद (लिम्बु जागरण)

(ख) २०३० सालदेखि हालसम्म

- अघिल्लो चरण (वि.सं.२०३० देखि २०४६ सम्म)ः यथार्थवाद (जातीय असमानता विरूद्धको भावना र शोषण विरूद्धको भावना)
- पछिल्लो चरण (वि.सं. २०४६ देखि हालसम्म)ः यथार्थवाद र प्रगतिशीलता (जातीय र वर्गीय शोषण विरूद्धको भावना)

विजय सुब्बाले द्वैकालिक अवधारणा अगाडि सार्दै माध्यमिक काल लिम्बु साहित्यमा नभएको सङ्केत गरेका छन् । उनले शैली र सिल्पभन्दा पनि वैचारिक दृष्टकोणले हेरेका छन् । वैचारिक दृष्टिमा पनि बढीमात्रामा प्रगतिवादी आँखाले हेरेका छन् जुन कुरा उनको स्कुलिङ्अनुसार आश्चर्यको विषय रहेन ।

वि.सं. २०६० दशकको आरम्भमा प्राज्ञ वैरागी काइँलाले **याक्थुङ् खे़दा?रे कुबोरे़न् चुक्मुक्पा साप्मुन्धुम्** (लिम्बु कथा विकासको सङ्क्षिप्त इतिहास) (तान्छोप्पा,२०६० असोज), **तक्पाःन्-थिक्सिगेःक् याक्थुङ् माःसाःम्बे** (भूमिका- प्रथम लिम्बु महाकाव्य) शीर्षको **सोधुङ्गे़न् इमानसिंह चोःत्लुङ्**को भूमिका (२०६० पुस) र **लिम्बु भाषा-साहित्य र आजको लिम्बु कथा** (सयपत्री पूर्णाङ्क १९, २०६१) शीर्षकको समालोचना लेखमा लिम्बु साहित्यको कालविभाजनको अनुकल्पना अगाडि सारेका छन् । वि.सं. २०६४ फागुन ४ देखि ७ गतेसम्म नेपाल प्रज्ञा-प्रतिष्ठानले आयोजना गरेको राष्ट्रिय साहित्य सङ्गोष्ठीमा वैरागी काइँला र अमर तुम्याहाङ्ले संयुक्त रूपमा प्रस्तुत गरेका **लिम्बु भाषाको वर्तमान साहित्यिक अवस्था र समस्या** नामक कार्यपत्रमा पनि यसअघि प्रस्तुत कालविभाजनको अवधारणालाई नै निरन्तरता दिइएको छ । वैरागी काइँलाले अगाडि सारेको कालविभाजन निम्नअनुसारको रहेको छः

१. प्राथमिक काल (१७०४-१९२४ ई.)

२. माध्यमिक काल (१९२५-१९५४ ई.)

३. आधुनिक काल (१९५५ ई. देखि हालसम्म)

३. (क) पूर्वार्ध काल

३. (ख) उत्तरार्ध काल

वैरागी काइँलाले अगाडि सारेका लिम्बु साहित्यको कालविभाजन धेरै प्रचलित त्रिकालिक पद्धतिमा आधारित छ । यसरी कालविभाजन गर्दा उनले सम्बन्धित कालको विशेषताहरु पनि पहिचान गरी उल्लेख गरेका छन् । लिम्बु भाषा र साहित्यको प्राथमिक काल शिक्षा, भक्ति, उपदेश र

प्रार्थनाका काव्यको युग थियो (पृ. १३५, यसपत्री, २०६१) । माध्यमिक कालमा गद्य र पद्य दुवै विधामा नीति कथा, लोककथा र उपदेश, भक्तिगीत, प्रार्थना र भजनहरूको सृजना तथा मुन्धुम् आलेखन गर्ने, भाषा र लिपिको उत्थानको विषयवस्तुमा आधारित लेखनप्रवृत्ति कायम रहयो (पृ. १३७ ऐं)। यसरी नै आधुनिक कालको पूर्वार्ध मूलतः वि.सं. २०४६ साल पूर्वको लिम्बु साहित्य मौलिक, नयाँ भाषा, शैली र शिल्पसहितको रहेको वैरागी काइँलाको ठम्याइ रहेको छ । आधुनिक कालको उत्तरार्ध अर्थात् वि.सं. २०४६ पछि लेखिएका लिम्बु साहित्यका कविता, कथा, निबन्ध, नियात्रा, जीवनी, उपन्यास, खण्डकाव्य, महाकाव्य तथा नाटक विधाहरु मौलिक र सृजनात्मक हुनुका साथै विविध विषयवस्तु, शैली, शिल्प, प्रविधि र भाषाको नवप्रयोगहरु पर्याप्तमात्रामा भएका छन् । लिम्बु साहित्यको यिनै विशेषताहरूलाई लिम्बु साहित्यको कालविभाजनको आधारभूमि मानिएको छ । यसर्थ वैरागी काइँलाले अगाडि सारेको लिम्बु साहित्यको कालविभाजन तर्कसङ्गत देखिन आएको छ ।

लिम्बु साहित्यको कालविभाजन विषयमा कलम चलाउने अर्का व्यक्ति हुन्ः मोहन तुम्बाहाङ् । उनले लेखेको **लिम्बु साहित्यको सङ्क्षिप्त परिचय** शीर्षकको लेख तङ्सिङ पत्रिकामा वैशाख २०६१ मा प्रकाशित भएको थियो । उक्त लेखमा उनले लिम्बु साहित्यलाई निम्नअनुसारको कालमा विभाजन गरेका छन्ः

१ प्राथमिक काल (सिरिजङ्गाहाङ्देखि त्येअङ्सी सिरिजङ्गा जन्मनुपूर्वसम्म)

२ माध्यमिक काल (त्येअङ्सी सिरिजङ्गादेखि .... सम्म)

मोहन तुम्बाहाङ्ले लिम्बु साहित्यको आरम्भ सिरिजङ्गाहाङ्ले किरात लिपिमा मुन्धुम् लेखपढ गर्न सिकाए भन्ने किंवदन्तीलाई आधार मानेर सन् ८८० देखि नै लिम्बु साहित्यको प्राथमिक काल सुरू भएको भन्ने आफ्नो धारणा अगाडि सारेका छन् । त्यो समयमा किरात लिपिमा लेखिएको मुन्धुम् पुस्तकको कुनै अवशेष हालसम्म प्राप्त छैन ।

लिम्बु साहित्यको इतिहासलाई विभिन्न समय सीमामा बाँध्ने अर्का लेखक हुन् थाम्सुहाङ् पुष्प सुब्बा । उनले लिम्बु साहित्यको काल विभाजन आफ्नो कृति **लिम्बु भाषाः साहित्यिक श्रष्टा र दृष्टिकोण** मार्फत् अगाडि सारेका हुन् । उनले आफ्नो भनाइमा उक्त पुस्तकको छोटकरी स्वरूप वि.सं. २०५७ तिरै तयार गरेको र त्यसैलाई पछि वि.सं. २०५९ तिर विस्तृत रूप दिई वि.सं. २०६१ मा प्रकाशनमा आएको हो । २०५७ मा लेखिएको लेखमा नै लिम्बु साहित्यको कालविभाजन भएको थियो कि थिएन ? यसबारेमा लेखक स्वयम् मात्र जानकार छन् । यो लेख सो समयमा नै सार्वजनिक भएको भए यसको पृथक महत्त्व रहन्थ्यो नै । तर यसले सार्वजनिक हुने अवसर वि.सं. २०६१ असारमा मात्रै पायो । यस पुस्तकमा लिम्बु साहित्यलाई निम्नअनुसारको कालहरूमा बाँधिएको छः

१ अज्ञात स्वर्णिम काल

२ प्रारम्भिक काल (वि.सं. ७००-१०००)

३ उत्थान काल (वि.सं.१७६१-२०११)

४ विकास काल (वि.सं. २०१२-२०२८)

५ आधुनिक काल (वि.सं. २०२९ देखि हालसम्म)

यस काल विभाजनमा अज्ञात स्वर्णिम युग भनेर लेखकले लिम्बु लोकसमाजमा प्रचलित मुन्धुम्को रचनाकाल र त्यसको विशेष प्रभावको युगलाई इङ्गित गरेको तथ्य अगाडि सारेको देखिन्छ । आदिकालीन मुन्धुम् लेखिएको थियो त ? यसको कुनै ठोष प्रमाण वर्तमान अवस्थामा पाइएको छैन । तथापि एउटा कुरा सुनिश्चित छ कि उक्त मुन्धुम्को रचनाकार पनि कुनै व्यक्ति नै थिए । मुन्धुम् रचना गर्ने श्रेय येहाङ् नामका सन्तलाई दिइने गरिन्छ । तर उनै येहाङ्ले रचना गरेको भनिएको मुन्धुम्को आधारमा नै लिम्बु समाजका सबै रीति, थिती र परम्पराहरू चलिआएका छन् ।

यसरी नै प्राथमिक काल भनी उल्लेख गरिएको कालावधिमा रचित कुनै रचनाहरूको तत्कालीन लेख्य रूप प्राप्त छैन । तर लोकमा चलेका तत्कालीन

समयका सन्त अगुवाहरूमध्ये माबोहाङ् र सिरिजङ्गाहाङ्का उपदेशहरूलाई यसका प्रमाणको रूपमा प्रस्तुत गरिएको छ जस्तैः

*साङ्साङ् साम्यो निसेम्मे*
*निङ्वा नुरिक् इत्तेम्मे ॥*
*निङ्वा सेसे चोगेम्मे*
*सेसे साङ्साङ् पाःक्खेम्मे ॥ (माबोहाङ्)*

यसपछि **उत्थान काल** र **विकास काल** भनी दुई वटा कालहरू अगाडि सारिएका छन् । यी दुई काल जनाउन प्रयोग गरिएका **उत्थान** र **विकास** शब्दहरूले माध्यमिक काललाई नै जनाउने कुरामा कुनै दुविधा छैन । इतिहास लेखनको सामान्य मान्यता र परम्पराअनुसार प्राथमिक काल र आधुनिक कालको बीचमा माध्यमिक काल नै पर्दछ । यस कालविभाजनमा माध्यमिक काल राखिएको पनि छैन । यसले पनि प्रष्ट हुन्छ कि यी दुई कालहरू माध्यमिक कालको बदलीमा आएका हुन् । उत्थान काल र विकास काल दुवैमा लिम्बु साहित्यको प्रामाणिक आधारहरूका लागि लेख्य समग्रीहरू पाइन्छन् ।

लेखक थाम्सुहाङ्ले साहित्यको आधुनिक कालको आरम्भ वि.सं. २०२९ लाई मानेका छन् । वि.सं. २०२९ मा स्वयम् लेखक थाम्सुहाङ् पुष्प सुब्बाद्वारा सम्पादित **सिरिजङ्गा** पत्रिकाको प्रकाशनलाई आधार मानेर आधुनिक काल प्रस्ताव गरिएको छ । सिरिजङ्गा पत्रिकामा प्रकाशित कुन रचना आधुनिक सहित्यको गुणले ओतप्रोत थियो भन्ने कुनै प्रमाण प्रस्तुत गरिएको छैन । यसर्थ पनि यहाँ भावुकता र हेलो इफेक्टले काम गरेको त होइन भन्ने ठुलो सन्देह छ । तर एउटा सम्भावना बाँकी नै छ कि उक्त पत्रिकाको मूल्याङ्कन गरी फेरि निर्क्योल गर्न सकिनेछ ।

### ४.२.३ टुङ्ग्याउनी

लिम्बु साहित्यको कालविभाजनका लागि लिम्बु साहित्यको विश्लेषण गर्न थालिएको इतिहास अत्यन्त अल्पकालीन छ । लिम्बु साहित्यका जति इतिहासकारहरूले यसबारेमा कलम चलाए उनीहरूको व्यक्तिगत प्रयास

मात्रै देखिन्छ । काल विभाजनमा एकरूपता छैन । एकरूपताका लागि चुम्लुङ् या सभा बसेर छलफल र बहस गर्ने काम कमै भएको छ । गद्य र पद्य दुवै विधालाई आधार मानेर तथ्यपरक कालविभाजन हुनु आवश्यक छ । विधागत रूपमा पनि लिम्बु साहित्यको कालविभाजन हुनु आवश्यक छ । यसका लागि हालसम्म लिम्बु भाषामा लेखिएका लेख र रचिएका रचनाहरूको गम्भीर समीक्षा हुनुपर्छ र तिनको मूल्य निर्धारण गरिनुपर्छ । तिनै मूल्यको आधारमा कालविभाजनको निर्क्योल गरिनुपर्छ । ❑

# ४.३ लिम्बु साहित्यको प्राथमिक काल

साहित्यका पद्य र गद्य गरी दुई रूप छन् । लिम्बु साहित्यमा पनि यिनै दुई रूप पाइन्छन् । गद्य र पद्य दुवै पक्षलाई समेटेर लिम्बु साहित्यलाई निम्न कालहरूमा विभाजन गरिएका छन्ः

(१) प्राथमिक काल (सन् १७०४ देखि १९२४)

(२) माध्यमिक काल (सन् १९२५ देखि १९५५)

(३) आधुनिक काल (सन् १९५६ देखि हालसम्म)

## ४.३.१ प्राथमिक काल (सन् १७०४ देखि १९२४)

सिरिजङ्गा दोस्राको जन्मसाललाई लिम्बु साहित्यको आरम्भ बिन्दु मानिएको छ । सिरिजङ्गा दोस्रो (१७०४–१७४१ ई०) ले किरात लिपिको पुनःआविष्कार गरेर अर्ती–उपदेशले पूर्ण, शिक्षाप्रद तथा ईश्वरको भजन र प्रार्थनाका पद्यहरु रचना गर्दै लिम्बुभाषाको लेख्यपरम्पराको आरम्भ गरेका थिए । जीवनोपयोगी उपदेशमूलक शिक्षाप्रद कविताहरूमा सिरिजङ्गा दोस्रोका **सेवा खाहुन्**जस्ता रचनाहरु आजसम्म हस्तलिखितरूपमा र श्रुतिपरम्परामा जीवित छन् ।

यसकालको आरम्भमा लिम्बु समुदायको निकै ठुलो समूह मूलतः सिक्किमे राजाको विशेष प्रभावमा रहेका लिम्बुहरूमाझ बौद्ध धर्मले निकै नै गाँजेको थियो । राज्यले बौद्ध धर्मलाई लिम्बु समाजमाथि पूरै थोपरेको थियो र लिम्बुहरु गुम्बा गएर बुद्धमार्गी गुम्बाशिक्षा नै लिनुपर्ने अवस्थामा पुऱ्याइएका थिए । यस प्रभावबाट लिम्बु समुदायलाई बचाउने प्रयास गर्दा सिरिजङ्गा दोस्रा सहिद नै बन्नु पऱ्यो ।

पहिलो विश्वयुद्धपछि महागुरू फाल्गुनन्दले आफ्नै मातृभाषा लिम्बुमा आफू र आफ्ना शिष्यहरूले गाउनका लागि तयार गरेका भजनहरूलाई पनि प्राथमिककालीन साहित्यको रूपमा लिन सकिन्छ । फाल्गुनन्दको अवधारणाअनुसार उनका चेलाहरूले मुन्धुम्लाई केही परिमार्जन गरी आलेखन गरे । साम्जिक मुन्धुम् नामक सत्यहाङ्मा पन्थका अनुयायीहरूले प्रयोगमा ल्याउने मुन्धुम् पुस्तक यसको एउटा ज्वलन्त उदाहरण हो । समाज सुधारक तथा सत्यहाङ्मा पन्थका महागुरू फाल्गुनन्दको अगुवाइमा सन् १९३० देखि १९४८ सम्म किरात समाजमा प्रचलित मुन्धुम्को परिमार्जन एवम् लिपिबद्ध गर्ने काम अभियानकै रूपमा भएको थियो । त्यो समयमा लेखिएका मुन्धुम्हरु हजारभन्दा बढी पान्डुलिपिहरु फाल्गुनन्दले स्थापना गरे गराएका मन्दिर र अन्य अनुयायीहरूसँग रहेको विश्वास गरिन्छ । फाल्गुनन्दका चेलाहरूले गुरूका वाणी र उपदेशहरूको आलेखन गरी लिम्बु (किरात) सन्त-साहित्यको जगमा थप शीला थप्ने काम गरे ।

## प्राथमिककालीन पद्य सहित्यको प्रवृति र विशेषता

(क) ताग़ेरानिङ्वाभुमा माङ्को सृष्टिलीलाको वर्णन

(ख) ईश्वर भक्ति मूलतः ताग़ेरानिङ्वाभूमा माङ्को उपासना

(ग) अर्ति-उपदेश तथा शिक्षाप्रद भजनहरूको रचना

(घ) यस्ता रचनाहरु लोकलयका साथै शास्त्रीय छन्दमा रचना गरिएका

(ङ) मुन्धुमी र आलङ्कारिक भाषाको अधिकतम् प्रभाव

लिम्बुभाषा र साहित्यको प्राथमिककालीन गद्यविधामा उपदेश तथा नीतिकथा लेखन युग थियो । यस समयमा ब्रायन हज्सन्ले किरात लिपि लेख्नजान्ने व्यक्तित्वहरु जोभानसिं लिम्बु, च्याङ्ग्रेसिं फ़ेदाङ्मा, हवल्दार रनधोज र खरदार जीत मोहनलाई विभिन्न विषयमा जानकारीमूलक लेख्न लगाई सङ्कलन गरेका थिए । सम्भवत प्राथमिककालीन लिम्बु साहित्यको सबैभन्दा अमूल्य निधि यही हुनुपर्छ । सामाज सुधारक तथा राष्ट्रिय विभूति महागुरू फाल्गुनन्दले आफ्नै मातृभाषा लिम्बुमा दिएका धार्मिक शिक्षाका प्रवचन र उपदेशहरूलाई त्यो समयको गद्य साहित्यको महत्त्वपूर्ण पक्षको रूपमा

लिन सकिन्छ । यसरी नै लालसोर सेन्दाङ्ले सिक्किमे लिम्बु समाजमा दिएका किरात लिपि, सिरिजङ्गाको जीवनी र उपदेशसम्बन्धी शिक्षाप्रद प्रचारप्रसार एवम् प्रवचनहरूले पनि यस कालमा केही न केही योगदान पुऱ्याएको थियो । उनले लेखेको **सिवा खाहुन्** (वि.सं. १९७३) प्राथमिककालीन महत्त्वपूर्ण ग्रन्थ हो । प्राथमिक कालको अन्तिम वर्षमा इमानसिंह चेम्जोङ्ले सिरिजङ्गाको जीवनी दुई खण्डमा **सिरिजङ्गा मुन्धुम्** (१९२४ ई०) तयार पारेर गद्यविधालाई उन्नत बनाउन योगदान गरेका थिए । यति हुँदाहुँदै पनि सिर्जनात्मक साहित्य लेखनको सुरूवात भने हुन सकेको देखिँदैन ।

## प्राथमिक कालीन गद्य सहित्यको प्रवृति र विशेषता

(क) मुन्धुमी तथा लोक कथाहरूको आलेखन

(ख) उपदेशरूहरूको सङ्कलन एवम् सङ्ग्रह

(ग) जानकारीमूलक लेख

(ग) जीवनी लेख

प्राथमिक कालीन लिम्बु साहित्यलाई ईश्वरभक्तिले पूर्ण रूपमा छोपेको थियो। यस कालको साहित्यले सृजनात्मक साहित्यको रूप धारण गर्न सकेन । विधागत आधारमा पनि लिम्बु साहित्यले विशिष्ठ रूप लिन सकेन ।

## ४.३.२ लिम्बु साहित्यको माध्यमिक काल (सन् १९२५ देखि १९५५)

लिम्बु साहित्यको माध्यमिक काल भनेर सन् १९२५ देखि १९५५ तदनुसार वि.सं. १९८२ देखि २०१२ सम्मको ३० वर्षको अवधिलाई लिइने गरिन्छ ।

मातृभाषाको उत्थानको उद्देश्य बोकेर कालेबुङ (दार्जिलिङ, भारत) मा सन् १९२५ ई० मा **याक्थुङ् हाङ् चुम्लुङ्**को स्थापना भयो । यो घटना लिम्बु भाषा साहित्यको इतिहासमा एउटा कोशे ढुङ्गा थियो । यसपश्चात् लिम्बु साहित्य-लेखनले अभूतपूर्व तीव्रता पायो । यसले लिम्बु भाषा साहित्यमा अर्को नयाँ युगको थालनी भयो । यस अवधि (सन् १९२५-१९५५) लाई लिम्बुभाषा र साहित्यको माध्यमिक कालका रूपमा लिइने गरिएको छ ।

इमानसिंह चेम्जोङ, सुबेदार बाजवीर थलङ, इ.के. बहादुर सेरेङ, निर्मलकुमार लिम्बु, हर्कजङ्ग माक्खिम, लप्टन शेरबहादुर लिम्बु, कालुसिंह पापो, सुबिदार बुद्धिराज फागो र जसमान साँबा तथा तिलोकसिंह नुगो आदिले सन् १९२८ देखि सन् १९३८ सम्म आफ्नो भाषा र साहित्यको विकासमा अमूल्य योगदान दिएर यस कालावधिलाई लिम्बुभाषा-साहित्यको स्वर्णयुग भन्न सकिने बनाए । पछि इमानसिंह चेम्जोङ्को सिक्किम प्रवास-कालमा भने सिक्किममा सक्रियता बढ्यो । गान्तोक सिक्किममा चेम्जोङ्, पदमसिंह मुरिङला, मनबहादुर खाम्धाक र सन्तवीर खाम्धाक लिम्बुसमेत भई वर्णमालाका पुस्तकहरु गान्तोक, सिक्किमबाट प्रकाशित (१९५१ ई.) गरी देशविदेशमा प्रचार-प्रसार गरे । मुख्यगरी यो युग मातृभाषाको उत्थानका लागि जागरणको युग थियो ।

माध्यमिक कालमा गद्य विधामा लेखिएका किताबहरु (काइँला, २०४९) निम्नअनुसार थिएः

| | |
|---|---|
| कालुसिं पापो | याक्थुङ् सेवा साम्लो (सन् १९३०) |
| सुबिदार बुद्धिराज फागो र | |
| जसमान साँवा | किराँत साम् मुन्धुम् (सन् १९३१) |
| लेखक अज्ञात | श्री जङ्गा मुन्धुम् साप्ला |
| तिलकसिं नुगो | किराँत मुन्धुम् (सन् १९५१) |

यी बाहेक विभिन्न समयमा निस्किएका वर्णमालाहरुमा निसाम्माङ् पाःन् (सरस्वती वचन), खाहुन् (उपद्येश), साम्लो (गीत) आदि प्रकाशित भएका पाइन्छन् । जस्तैः

क) निसाम्माङ् पाःन् या सरस्वती वचन

पहिलो श्लोक

[illegible] ॥

[illegible] ॥

clGtdZnf]s

ᤛᤠᤶᤍᤠ ᤁᤧᤜᤢ᤹ᤒᤠ ᤛᤠᤶᤍᤠ ᤁᤧᤏᤡᤶᤐᤠ ॥
ᤜᤡᤴᤈᤠᤜᤠ᤹ ᤁᤧᤖᤧᤰ ᤔᤧᤒᤥᤱᤗᤥ ᤆᤠᤐᤠ ॥

पहिलो श्लोक

निङ्वा?फुमा शक्शक् आहुक्यो वा?रो ॥
केखेबा केरेक् नोनिङ्वा तारो ॥

अन्तिम श्लोक

साप्ला केहु?बा साप्ला केनिप्पा ॥
हिन्जाहा? केरेक् मेबोङ्लो चापा ॥

पहिलो श्लोक

सरस्वती पुस्तक हातमा छ ।
पढेर सर्ब सुभावना आउँछ ।

अन्तिम श्लोक

पढ्न सिकाउने पढ्न सिक्ने ।
शिशुहरु सबै ज्ञानी बन्छन् ।

*(इमानसिंह चेम्जोङ्, याक्थुङ् निसिगेक् साप्ला, १९५१ ई. पृ. ७-८)*

ख) **साम्नि साम्लो** नाम दिइएको गीतको अंश

[illegible]
[illegible]
[illegible]
[illegible]
[illegible]
[illegible]

ए माङ्जुम् मेन्नेग ॥
ए माङ्वा मेन्नेग ॥
ए ना कोइ मेखेम्दुन् ॥
ए फाङ्जोङ् मेखेम्दुन् ॥
ए नावा मेयारून् ॥
ए खेम्सिङ् मेयारून् ॥

ए मौरी घार नै नभए ।
ए भीर मौरी नभए ।
ए त्यो भीर सुहाउँदैन ।
ए पहाड सुहाउँदैन ।
ए रूप, रूप हुँदैन ।
ए श्रृङ्गार सुहाउँदैन ।

*(तुम् याक्थुङ् निङ्वाफु साप्ला, १९५१ ई. पृ.२५)*

माध्यमिककालीन कविताको मूल्याङ्कन गर्ने क्रममा लाल-श्याँकारेलु रापचा र अन्य लेख्छन्- **...ई.१९५१ पश्चात् स्तुति कविताको सुरूआत इमानसिंह चेम्जोङ्, मनबहादुर खाम्धाक र पदमसिंह मुरिङला नुगोहरूको *याक्थुङ् निसिगेक साप्ला* (वर्नमाला) बाट भएको हो । इमानसिंह चेम्जोङ्कै *निङ्वाफु सेवा*, र *फुङखामा* कविताहरूमा बाल एवं भक्तिभाव सार झल्कने कविताहरु छन् । एमबी खाम्धाक पनि *निसाम सेवा* मा स्तुतिको सार लिएर प्रवेश गरेका हुन् ।** *(इन्डो - नेपाल किराँती भाषाहरु, २००८ ई., पृ. ४४३)*

## माध्यमिककालीन पद्य साहित्यका प्रवृति र विशेषता

उल्लेखित कृति र रचनाहरूको मूल्याङ्कन गर्दा माध्यमिककालीन लिम्बु पद्य साहित्यको प्रमुख प्रवृति र विशेषताहरु निम्नअनुसार उल्लेख गर्न सकिन्छः

(क) ईश्वर र सरस्वतीप्रतिको स्तुति र उपासनामा केन्द्रित रचना
(ख) पद्य रचनाका लागि लोकलय र शास्त्रीय छन्दको प्रयोग

(ग) नीति शिक्षा तथा उपदेशकेन्द्रित रचना

(घ) जीवनीपरक तर अध्यात्मकेन्द्रित रचना

(घ) माध्यमिककालको उत्तरार्धमा प्रकृति, प्राकृतिक सौर्न्दयको मोह र सोबाट शिक्षा ग्रहण

(ङ) माध्यामिककालको उत्तरार्धमा पद्य रचनाको विषय ईश्वर, देवीदेवता, मुन्धुमी पात्रपात्रा र सृष्टि आख्यानबाट प्रकृति, प्राणी र अन्य विषयतिर स्थानान्तरण

लिम्बुभाषामा लेखिएका गद्य साहित्यमा माध्यमिक कालको उत्तरार्ध र आधुनिक कालको प्रारम्भमा पनि सामाजिक विसङ्गति, विकृति र अन्धपरम्पराको विरोध तथा सामाजिक सुधारका साथै मातृभाषा र लिपिको उत्थान एवम् शिक्षाको प्रचारमा अत्यधिक जोड दिएको देखिन्छ । यस कालमा आधा दर्जनजति वर्णमालाका किताबहरु छापिएबाट यो समय लिम्बु भाषा साहित्यको पुनरजागरण एवम् चरम जागरणको समय भनेर सहजै अनुमान गर्न सकिन्छ । यसरी नै सो समयमा **मदपान निषेध** (१९३१ ई.) जस्ता पुस्तकका प्रकाशनले लिम्बु समुदाय आफ्नो समाजको विकृतिविरूद्ध मौखिक मात्रै होइन लिपित रूपमै अभियानका साथ अगाडि बढेको प्रमाणित हुन्छ । माध्यमिककालीन लिम्बु समाज सङ्गीत र कलाप्रति पनि सचेत भएको कुरा **किरँात सङ्गीत विद्या (१९३१ ई.)** पुस्तकको प्रकाशनले सिद्ध गर्दछ । यही कालावधिमा इमानसिंह चेम्जोङ्को **किरात इतिहास** (सन् १९४८ ई.) नामक एकदमै परिपक्वा इतिहासको पुस्तक पनि प्रकाशन आयो जसले किरात समुदाय र लिम्बु समुदायलाई आफ्नो प्रामाणिक इतिहासबारेमा ठोस जानकारी दियो । तर यस अवधिमा गद्यविधामा महागुरू फाल्गुनन्दका चेला रन्धोज नेम्बाङ्ले भने सत्यहाङ्मा–पन्थका धार्मिक कर्मकाण्ड र ज्योतिषसम्बन्धी ग्रन्थ तयार गरेर अर्कै धार प्रवाह गरेका थिए ।

माध्यमिककालीन गद्य विधाका पुस्तकहरु र तिनका लेखक

| | |
|---|---|
| बाजवीर थलङ | तुम याक्थुङ् साप्ला (सन् १९२८) |
| बाजवीर थलङ र सहलेखक इमानसिंह चेम्जोङ् | निसिगेक याक्थुङ् साप्ला (सन् १९३१) |

| | |
|---|---|
| ई.के. बहादुर सेरेङ | तुम याक्थुङ् साप्ला (सन् १८३१) |
| सुबेदार हर्कजङ् माखिम (वर्मा) | मदपान निषेध (सन् १९३१) |
| सुबेदार हर्कजङ् माखिम (वर्मा) | किरात लिम्बु-नेपाली शब्द सङ्ग्रह (सन् १९३१) |
| लेखक अज्ञात | सुम्सिगेक याक्थुङ् साप्ला |
| लेखक अज्ञात | हाक्थुङ हिसाब साप्ला |
| निर्मल लिम्बु र जीवनदास राई | तुम याक्थुङ् साप्ला |
| लफ्टन शेरबहादुर मेयोहाङ् र | |
| मोहनलाल हाङ्गम | किराँत वर्णमाला |
| सुबिदार बुद्धिराज फागो र | |
| जसमान साँवा | किराँत सङ्गीत विद्या (१९३१) |
| इमानसिंह चेम्जोङ् | किरात इतिहास (सन् १९४८) |
| इमानसिंह चेम्जोङ्/ | |
| मानबहादुर खाम्धाक/ | |
| पदमसिंह मुरिङला | तुम् याक्थुङ् निङ्वाफु साप्ला (सन् १९५१) |
| पदमसिंह मुरिङला | याक्थुङ् निसिगेक् साप्ला (सन् १९५१) |

*(लिम्बु भाषा र साहित्यको सङ्क्षिप्त परिचय, २०४९, पृ.४३-४८)*

माध्यमिक कालमा नीति शिक्षा दिने खालका प्राणी केन्द्रित सरल तर गहन विचार र शिक्षा प्रवाह गर्ने बाल साहित्यको रचनाहरु पनि भएका थिए । उदाहरणको लागि सन् १९३१ मा सुबेदार बाजवीर थलङ र इमानसिंह चेम्जोङ्को संयुक्त लेखनमा प्रकाशित **निसिगेक् याक्थुङ् साप्ला**को एउटा कथालाई लिन सकिन्छः

[illegible]
[illegible]
[illegible]
[illegible]

ᤕᤒᤧᤀᤠᤱ ᤔᤧ᤺ᤛᤩᤧ ॥ ᤂᤧᤴ ᤕᤧᤶᤔᤨ ᤁᤠᤵᤐᤨᤒᤠ ᤐᤍ᤺ᤰᤐᤠᤎᤡᤰ ᤐᤠ᤺ᤰᤂᤠ ᤗ᤺ᤴᤍᤧ ॥ ᤁᤠᤵᤐᤨᤒᤠ ᤐᤍᤩ᤺ᤰᤐᤠᤗᤗᤧ ᤜᤡᤴᤈᤠᤜᤠ᤹, ᤔᤧᤳᤋᤢᤛᤡ-ᤜᤡᤴᤈᤠ᤹ᤛᤧ ᤀᤠᤏᤡᤃᤧ ᤛ᤺ᤳᤋᤡᤃᤧᤗᤗᤧ ᤌᤧᤀᤠᤱ ᤗᤢᤱᤅᤡᤗᤗᤧ ᤀᤠᤃᤧᤗᤧᤵᤋᤡᤒᤠ ᤒᤧ ! ᤂᤧᤏᤡ᤹, ᤁᤧᤴᤏᤡᤛᤢᤶᤔᤡᤶᤒᤡ ᤀᤠᤏᤡᤃᤧ ᤗᤠᤱᤜᤢᤰ ᤀᤧᤃᤧᤒᤠ

ᤁᤶᤔᤩᤠᤰ ᤐᤠ᤺ᤳᤋᤢᤀᤠᤱ ᤁᤠᤵᤐᤨᤒᤠ ᤐᤍ᤺ᤰᤁᤡᤴ ᤘᤠᤖᤰᤛᤡᤃᤠᤱ ᤗᤠᤛᤧᤒᤧ ॥

ᤂᤠᤜᤢᤴ- "ᤜᤡᤴᤈᤠ᤹ᤛᤧ ᤜᤠ᤺ᤳᤋᤠᤱ ᤋᤢᤰᤂᤧ ᤔᤧᤴᤈᤠ᤺ᤵᤔᤠᤏᤠᤜᤠ᤹, ᤀᤠᤵᤑᤠᤗᤗᤧᤀᤠᤱ ᤛᤧᤵᤔᤠᤛᤡ ᤔᤧ᤺ᤴᤗᤨ ॥"

हिम्थिक्ले़ कुबेसाङ् वारक्थिक् ने़स्से़ ॥ थिक्ये़न् यम्बा वाहित् थासुआङ् चिप्तु ॥ खेन् वाबाक्ओ पद्यःक्पाहा? मे़लःन्दे़आङ् यल्लिक साम्लोनु मे़अःक्ते़ ॥ हे़क्केआङ् खे़न् हिम्मोबा हिन्जाहा?रे़ खे़न् पद्यःक्पाहा? लुङ्ले़ मे़ले़प्तुसि ॥ हे़क्केआङ् सिदःत् पद्यःक्पाहा?रे़ लाङ् हुक् मे़ऐ़गे़ ॥ आक्खेल्ले़ग खुन्छि? थे़गेःक्काङ् यबे़आङ् मे़स्ये़ ॥ खे़न् ये़म्मो काप्पोबा पदःक्पाधिक् पाःक्खा लःन्दे़ ॥ काप्पोबा पद्यःक्पाल्ले़ हिन्जाहा? मे़त्तुसि- हिन्जा?से ! आनिगे़ सःत्तिगे़ल्ले़ थेआङ् लुङ्ङिल्ले़ आगे़ले़प्तिबा बे ? खेनि? के़न्निसुम्मिम्बि आनिगे़ लाङ्हुक् एगे़बा !

कम्म्याक् पाःत्तुआङ् काप्पोबा पदःक्किन् वारक्सिगाङ् लासे़बे ॥

खाहुन्- "हिन्जा?से ! हाःत्ताङ् तुक्खे मे़न्जाःप्मानाहा? आप्फाल्ले़आङ् से़प्मासि मे़ःन्लो ॥"

अनुवादः एउटा घरको नजिकै एउटा पोखरी थियो । एकदिन ठुलो पानी पऱ्यो । त्यो पोखरीमा भ्यागुताहरु निस्किएर ठुलो स्वरमा गीत गाउन थाले । त्यसपछि पोखरीछेउको घरका केटाकेटीहरूले भ्यागुताहरूलाई ढुङ्गाले हाने । ढुङ्गाले लागेर धेरै भ्यागुताहरूको हात खुट्टा भाँचिए । कतिको त टाउकै फुटेर पनि मरे । त्यो समयमा बूढो भ्यागुतो पाखा निस्कियो । बूढो भ्यागुतोले केटाकेटीहरूलाई भन्यो- नानी हो ! हामी रमाउँदा किन ढुङ्गाले हानेको ? तिमीहरूले देखेनौँ, हाम्रो हातखुट्टा भाँचिएको !

त्यति भनेर बूढो भ्यागुतो पोखरिमा पस्यो ।

शिक्षा-"नानी हो ! कसैलाई दुःख नदिने प्राणीहरूलाई कहिल्यै मार्नु हुँदैन ।"

*(आनि पाःन्, कक्षा १, परिमार्जन ०६४, पृ.४६ तथा याक्थुङ्* निसिगेक् साप्ला, ०५१ ई. पृ. २२-२३*)*

माध्यमिककालीन केही गद्य रचनाहरूमा लोक कथा, मौलिक कथा, अनुवाद वा आगन्तुक कथा, गाई, कुकुर सम्बन्धी प्रवन्धात्मक निबन्धहरू पनि पाइन्छन् ।

## माध्यमिककालीन गद्य साहित्यका प्रवृति र विशेषता

उल्लेखित कृति र रचनाहरूको मूल्याङ्कन गर्दा माध्यमिककालीन लिम्बु गद्य साहित्यको प्रमुख प्रवृति र विशेषताहरू निम्नअनुसार उल्लेख गर्न सकिन्छः

(क) सामाजिक विसङ्गति, विकृति र अन्धपरम्पराको विरोध तथा सामाजिक सुधारको सन्देश रचनाहरूमा प्रकट हुन सुरू

(ख) मातृभाषा र लिपिको उत्थान एवम् शिक्षाको प्रचारमा जोड

(ग) लोककथाको धरातलमा मौलिक कथाहरूको लेखन आरम्भ

(घ) सरल निबन्धहरूको लेखन आरम्भ हुनु

(ङ) अनुवाद कथाहरू प्रवेश गर्नु

(च) विधागत पहिचानका साथ पुस्तकहरू लेख्न थालिनु, जस्तै **किरात इतिहास**

(छ) तत्कालीन रचनाहरूमा आधुनिक गद्य रचनाका आधारभूत विशेषताहरू मौलाउन थाल्नु

## ४.३.३ आधुनिक लिम्बु काव्य (सन् १९५६ देखि हालसम्म)

लिम्बु साहित्यको कविता-काव्य विधामा आधुनिक काल सुब्बा खड्गबहादुर नेम्बाङले **किराँत मिक्-हऽन् साम्लो** (२०१२, वि.सं.) लेखी प्रकाशन गरेपछि सुरू भएको मानिन्छ । त्यसैले वि.सं. २०१२ अर्थात् सन् १९५६ देखि आजतक लेखिएका साहित्यलाई आधुनिक लिम्बु साहित्यको रूपमा लिइने गरेको छ । यसलाई पनि पूर्वार्ध र उत्तरार्द्ध गरी दुई खण्डमा

विभाजन गरी हेर्ने गरिएको छ । आधुनिक लिम्बु कविताको पूर्वार्ध भन्नाले वि.सं. २०१२ देखि २०२९ अर्थात् ईस्वी संवत् १९५६ देखि १९७३ सम्म र उत्तरार्द्ध वि.सं. २०३० अर्थात् सन् १९७४ देखि हालसम्म रचित साहित्यलाई लिने गरिन्छ । लिम्बु साहित्यमा उत्तर आधुनिकताको आरम्भ वि.सं. २०४७ अर्थात् ईस्वी संवत् १९९० देखि भएको हो ।

## आधुनिक लिम्बु कविता-काव्यको पूर्वार्धका कृतिहरूः

काव्यकृति (कविता सङ्ग्रह तथा खण्डकाव्य वा काव्य)ः

| कवि | कविताकृति |
|---|---|
| ● सुब्बा खड्गबहादुर नेम्बाङ् (वि.सं. १९७१/११/२९-२०३८/५/) | किराँत मिक्-हऽन् साम्लो, खण्डकाव्य (वि.सं.२०१२) |
| ● इमानसिंह चेम्जोङ् | किरात मुन्धुम्(सं.२०१८/सन् १९६१) |
| ● इमानसिंह चेम्जोङ् | किरात मुन्धुम् खाहुन् (सन् १९६५) |

आधुनिक लिम्बु कविता-काव्यको उत्तरार्धका कृतिहरूः
काव्यकृति (कविता सङ्ग्रह तथा खण्डकाव्य वा काव्य/मुन्धुम् काव्य)ः

| कवि | कविताकृति |
|---|---|
| ● वीर नेम्बाङ् | सेम्मुई, खण्डकाव्य (सन् १९८६) |
| ● विरही काइँला | केसाम्ी नाम्सामी, खण्डकाव्य (सन् १९८७) |
| ● थिन्दोलुङ खगेन्द्रसिं (सङ्./सम्पा.) | साम्यो सोसुम (वि.सं. २०४७) |
| ● वैरागी काइँला (सङ्./सम्पा.) | साप्पोक चोमेन् मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०४८) |
| ● वैरागी काइँला (सङ्./सम्पा.) | नाहेन् मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०५१) |
| ● वैरागी काइँला (सङ्./सम्पा.) | साम्सोघा मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०५१) |
| ● वैरागी काइँला (सङ्./सम्पा.) | ससिक् मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०५२) |

| | |
|---|---|
| • नरबहादुर यङहाङ् (सङ्./सम्पा.) | पालाम्, लोक काव्य (२०५२) |
| • दुर्गाप्रसाद फोपाहाङ् (सङ्./सम्पा.) | नावा चइत् मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०५१) |
| • वैरागी काइँला (सङ्./सम्पा.) | तङ्सिङ्तक्मा मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०५२) |
| • डिल्ली लिङ्दम | मना चइ:त्हा?, कविता सङ्ग्रह (वि.सं.२०५६) |
| • सेसेमि से-नाल्बो | इङ्जुम्, पालाम् सङ्ग्रह (वि.सं. २०५६) |
| • रणबहादुर मेन्याङ्बो (सङ्./सम्पा.) | किरात येत्हाङ् साम्जिक मुन्धुम् (वि.सं. २०५७) |
| • अमर तुम्याहाङ् | सेवारो, बालकविता सङ्ग्रह (वि.सं. २०५८) |
| • सेर्मा साम्जिरि सेमि | सुम्सुम् साम्मिला सुङ्, कविता सङ्ग्रह (वि.सं. २०५९) |
| • थाम्सुहाङ् पुष्प सुब्बा | इत्निमहा?, खण्डकाव्य (वि.सं. २०५९) |
| • सेसेहाङ् फियाक | तोलिङ्सोमुबा आसाम्मिलाहा?, कविता सङ्ग्रह (वि.सं २०६०) |
| • तेजब. फागो पन्धाक (सङ्/सम्पा.) | सावा येत्हाङ् मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०६०) |
| • अमर तुम्याहाङ् | सोधुङ्गेन इमानसिं चोत्लुङ, महाकाव्य, (वि.सं. २०६०) |
| • तोङ्सा नयोङ्हाङ् | फुङ्काप्ला, कविता सङ्ग्रह (वि.सं. २०६१) |
| • टङ्क वनेम | पेन्जिरि पेन्मिक्हा?, कविता सङ्ग्रह (वि.सं. २०६२) |
| • साम्जिरि/सेसेहाङ्/सेसेमी | सुम्जिरि फुङ, संयुक्त कविता सङ्ग्रह (वि.सं.२०६४) |
| • राजकुमार तेयुङ 'तेयुङ' | लिम्बुवान आम्मा, कविता सङ्ग्रह (वि.सं. २०६४) |

| | |
|---|---|
| ● बालि छथरे | तुक्सि फुङ्दाप्लाघा?, कविता सङ्ग्रह (वि.सं. २०६४) |
| ● सेसेमि सेनाल्बो | सोबुहाङ्मा, खण्डकाव्य (वि.सं. २०६५) |
| ● ध्रुब कु. मेन्याङ्बो/अर्जुनबाबु माबुहाङ् (सङ्./सम्पा.) | सिभाक् यामि मुन्धुम्, मुन्धुम् काव्य (वि.सं. २०६६) |
| ● बिर्खमान याक्थुङ् | आजिबा येम्हा?मो, कविता सङ्ग्रह (१९९३ ई.) |
| ● सामूहिक | साम्मिला साप्पन् (१९९५ ई.) |
| ● पूर्ण मुरिङ्ला | आनि?निङ्साङ्हा?, कविता सङ्ग्रह (१९९७ ई.) |
| ● सामूहिक | साम्मिला सुङ (१९९८ ई.) |
| ● वीर नेम्बाङ् | मेन्हक्माना नेफु?रे मिःम्, कविता सङ्ग्रह (२००१ ई.) |
| ● जसराज लिम्बु(पन्धाक)(सङ्./सम्पा.) | मुजोक्लुङ खाम्बमोक्लुङ मुन्धुम्, मुन्धुम् काव्य (२००३ ई) |
| ● चन्द्र माङ्युङ | हेक्केआङसा? कुसिङ्नितुङ्ल?आ?, कविता सङ्ग्रह (२००४ ई.) |
| ● बी.बी. सुभा (मुरिङ्ला नुगो) | साम्मे-साम्मिला, गीत सङ्ग्रह (२००४, ई.) |
| ● राजु याक्थुङ् 'साम्सिङ्बो' | चोत्लुङरे थरे?, कविता सङ्ग्रह (२००५ ई.) |
| ● दिलेन्द्र कुरुम्बाङ | आहिम्मिन्,कविता सङ्ग्रह(२००६ ई.) |
| ● सम्पा. बी.बी. मुरिङला (सामूहिक) | साम्मिला साप्सक्, कविता सङ्ग्रह (२००६ ई.) |
| ● बल मुरिङ्ला | पोक्की, कविता सङ्ग्रह (२००६ ई.) |
| ● बुधि 'लेक्वाहाङ्' खाम्धाक | कुसङ् तानाम, कविता सङ्ग्रह (२००७ ई.) |

| | |
|---|---|
| ●सन्तोष तेराप्पे | मिम्जिमे, कविता सङ्ग्रह(२००९ ई.) |
| ●लिला तुम्बापो | सुम्हाक्लुङ, कविता सङ्ग्रह(२००९ ई.) |
| ●मिलन मुरिङ्ला नुगो | सुनो सेप्माङ्हा?, कविता सङ्ग्रह (२०१० ई.) |
| ●खगेन्द्रसिंह आङ्बुहाङ्(सङ्.) | किरात याक्थुङ्बा येबा मुन्धुम्, मुन्धुम काव्य (वि.सं.०५८) |
| ●नरबहादुर यङहाङ् | बलिहाङ् तङनाम 'लारिङगे' (वि.स.२०५३) |
| ●नरबहादुर यङहाङ् (सङ्./सम्पा.) | याक्थुङ् मुक्पान् सुम्, (वि.स.२०६१) |
| ●हरि चङबाङ 'सेन्छेन्हाङ्' | थक्लारेऩ ताराप्पो तगि पोमेल्ले(.....) |
| ●उत्तमकुमार यङहाङ् | उत्तम पालाम् सङ्ग्रह (वि.सं. २०६२) |
| ●राजकुमार तेयुङ् | लिम्बुवान् माम्मा, कविता सङ्ग्रह (वि.सं. २०६४) |
| ●रैप्रसाद हुक्पाचङ्बाङ्(सङ्./सम्पा.) | साम्बा मुन्धुम्, मुन्धुम् सङ्ग्रह (वि.सं.२०६६) |
| ●थाम्सुहाङ् पुष्प सुब्बा | मक्खिवा फुङ् महाकाव्य (वि.सं.२०६७) |
| ●भित्रागी काइँला | केदाप्पा निङ्वाहा? (वि.सं.२०६७) |
| ●बल मुरिङ्ला | पाप्मिपा एगाङ्बा तोक्ला, कविता सङ्ग्रह (ई.सं. २०११) |
| ●बल मुरिङ्ला | नेप्पाल्लाम् मेन्छ्यासित् फेरे, खण्डकाव्य (ई.सं. २०१३) |
| ●तेन्जिङ तापेली | इमेल्लेम्ना फुङ्हा? कविता सङ्ग्रह (वि.सं. २०७०) |

## आधुनिक लिम्बु कविता काव्यको विशेषताहरु

आधुनिक लिम्बु कविता काव्यलाई समसामयिक धारा, प्रगतिशील धारा, स्वछन्दतावादी धारा, अस्तित्ववादी धाराको कोणबाट पनि विभाजन गरेर

हेर्न सकिन्छ । तर यी धाराहरूको विशद् अन्वेषण, गवेषण भएको छैन । यद्यपि यी धाराका रचनाहरु पर्याप्त मात्रामा पाइन्छन् । आधुनिक कालमा आएर शास्त्रीय मुन्धुम् आलेखन गर्ने र त्यसको व्याख्या गर्ने काममा पनि अभियानकै रूपमा काम भइआएको छ जसले लिम्बु साहित्यको मजबुत शास्त्रीय आधारको पहिचान गराएको छ । लिम्बु समुदाय सधैँ सत्ताको जाँतोमुनि पिसिएका कारणले अस्तित्व कायम गर्न समाजमा जनजागरण ल्याउने, त्यसको आधारमा विद्रोहको मानसिकता तयार गर्ने र स्वत्वको लागि सङ्घर्ष गर्न अभिप्रेरित गर्ने खालका साहित्यहरु निरन्तर लेखिइरहे । यसर्थ पनि आधुनिक लिम्बु साहित्य कालमा पनि एउटा प्रशाखाको रूपमा निरन्तर जागरणमूलक साहित्य रचना हुँदै आएको पाइन्छ। आधुनिक लिम्बु कविता काव्यको केही विशेषताहरूलाई बुँदागत रूपमा निम्नअनुसार प्रस्तुत गर्न सकिन्छः

- परम्पराको विरोध र राजनैतिक, सामाजिक जागरणको अभिव्यक्ति
- विकृति र विसङ्ति प्रति विद्रोही चेत
- विभिन्न साहित्यिकवादहरु (प्रगतिवाद, अस्तित्ववाद, विसङ्गतिवाद, आदि) बाट प्रभावित रचना
- कविता काव्यमा तार्किकता
- बिम्ब र प्रतीकको प्रयोग
- गद्य परम्पराका साथै नवीन भाषाशैलीको प्रयोग
- युगीन मूल्य र मान्यताको अभिव्यक्ति
- जातीय एवम् नाश्लिक अस्तित्वको खोज
- मुन्धुम्को पुनःलेखन र व्याख्या, आदि।

## आधुनिक लिम्बु कथा काव्यको विशेषताहरु

मुन्धुम्का विभिन्न श्रृङ्खलाहरूमा दार्शनिक दृष्टिकोण दिने, नैतिक पाठ सिकाउने, स्वजातीय विश्व दृष्टि दिने खालका रोचक, प्रेरणादायी कथाहरु पर्याप्त मात्रामा पाइन्छन् । तर लिखित रूपमा आएको कथा भने जोभानसिं लिम्बुले वि.सं. १९०३ मार्ग शुदी ५ का दिन लेखिएको 'याक्थुङ्हाङ् मुन्धुम्'

(काइँलाः २०४९) हो भने मुद्रणको हिसाबले मेजर एच.ए.आर. सेनियर आई.एस.सी.ले सम्पादन गरी वि.सं. १९६२ मा प्रकाशित गरेको 'लोछा सा सम्पत्ति के जाबा' लाई मानिन्छ ।

वि.सं. २०१८ मा प्रकाशित काजीमान कन्दङ्वाको पाङ्खरे योबाआङ येरा कथा सङ्ग्रहका कथा लिम्बु आधुनिक कथा थालनीका प्रस्थान विन्दु हुन्। वि.सं. २०२९ (सन् १९७२) देखि पुष्प थाम्सुहाङ्को सिरिजङ्गा, वि.सं. २०३० (सन् १९७४) देखि रणबहादुर मेन्याङ्बोले सम्पादन गरेको थोक्ला, वि.सं. २०३० (सन् १९७४) बाट मोहन इजम र बी.बी. मुरिङ्लाले सम्पादन गरेको पत्रिका तुम्दुम्दोहेना प्रकाशित हुन थालेपछि लिम्बु कथा लेखन तथा प्रकाशनले तीब्रता पाएको हो । यसपछि मोहन इजम, बी.बी. मुरिङला, हर्क खाम्धाक, चन्द्र माङ्युङ, देवमान याक्थुङ् होन्दोक, बुधि लेक्वाहाङ् खाम्धाक, सम्बर ताम्लिङ आदि दर्जनौ कथाकारहरु लिम्बु साहित्यमा उदाएका छन् र आफ्नो स्वपहिचान कायम गरेका छन् ।

कृतिका रूपमा आएका केही लिम्बु कथासङ्ग्रहहरु निम्नअनुसार रहेका छन्ः

| कथाकार | कथाकृति |
|---|---|
| • देवमान याक्थुङ् 'होन्दोक' | मिक्किफुङ्ले वे? नाइबेग(१९९३ ई.) |
| • बुधि 'लेक्वाहाङ्' खाम्धाक | इत्ला?बा सेप्माङ्हा?, हास्यकथा सङ्ग्रह (१९९७ ई.) |
| • सम्बर ताम्लिङ लिम्बु | कुसङ् ओत्ती, कथा सङ्ग्रह(२००५ ई.) |
| • पेरेम मुरिङ्ला | सेप्माङ् खेदा?सुङ्, कथा सङ्ग्रह (२००९ ई.) |
| • बुधि लेक्वाहाङ् खाम्धाक | पेमुक्सिगाङ्बा खेदा?हा?, कथा सङ्ग्रह (२००९ ई.) |
| • हर्क खाम्धाक (सम्पादक) | इमेत्नासुङ् कथा विशेषाङ्क (अङ्क २५, २००३ ई.) |

- शिवकुमार श्रेष्ठ (सङ्कलक) किराँती लोककथाहरू, लोककथा सङ्ग्रह (वि.सं. २०४७)
- शिवकुमार श्रेष्ठ (सङ्कलक) किराती लोककथा सङ्गालो (वि.सं. २०५१)
- शिवकुमार श्रेष्ठ (सङ्कलक) किराती फोक-टेलस्(अङ्ग्रेजी,१९९९ ई)
- लक्ष्मी कुमार सेर्मा (पापो) याक्थुङ् पाङ्खेदा?, लोककथा सङ्ग्रह (वि.सं. २०५५)
- वैरागी काइँला (प्र.सम्पादक) फाङ्से?से खेदा?हा?, संयुक्त कथा सङ्ग्रह (वि.सं.२०६२)
- राजभक्त चेम्जोङ/ डिल्ली लिङ्दम मिक्तोःक्, लघुकथा सङ्ग्रह (वि.सं. २०६२)
- क्षितिज सुब्बा (साँवा) बाजाहाङ् नु योनाहाङ् (वि.सं. २०६६)

विषयवस्तुका आधारमा भन्ने हो भने लिम्बु कथाका विषयवस्तु कथाकारहरूको समकालिक जीवनभोगाइका क्रममा बेहोरिने घटना परिघटनाहरू नै हुनेगरेका छन् । लिम्बु आधुनिक कथाहरूको विषयवस्तुको बारेमा वैरागी काइँला लेख्छन्ः '... सामाजिक जीवनमा रातोदिन भोगिने शोषण, धनीबाट हुने अपमान, अत्याचार, गरिबी, भेदभाव, असमानता, अशिक्षा, प्रेम, मिलन, बिछोड तथा गाउँघरको जीवन, मेलापात, दुःखसुख आजका लिम्बु कथाका विषयवस्तु हुन् । त्यसरी नै मातृभूमि, पितापुर्खाले आर्जेको जग्गाजमिन त्यागेर काम खोज्दै विदेश– मलेसिया, हङकङ, अरब, खाडी देश, सिङ्गापुर, युके गएका, गोराको गोर्खा पल्टनमा भर्ना भएर यु.के., सिङ्गापुर, ब्रुनाई पुगेका लिम्बुहरूका जीवनको दुःख आजका लिम्बु कथामा विषयवस्तुका रूपमा देखा पर्दछन्।' (काइँलाः २०६१:१३९) मूलरूपमा लिम्बु कथाहरू सामाजिक कथा रहेका छन्।

आफ्नो इतिहासप्रतिको चेतना, आफ्नो भूमि, भाषा र संस्कृतिप्रति प्रतिबद्धता, सामाजिक विकृति र विसङ्गतिको विरोध, शोषण, अन्याय र

अत्याचार, असमानता र भेदभावप्रति तीव्र आक्रोश (काइँलाः २०६१:१४९) वर्तमान लिम्बु कथाका विशेषता हुन् ।

## आधुनिक लिम्बु उपन्यास र तिनका विशेषताहरू

लिम्बु भाषाको प्रथम उपन्यास थत्थामा हो । यो उपन्यासका उपन्यासकार अपतन साहित्य अभियानका एक नायक पदमसिंह मुरिङ्ला हुन् । थत्थामा उपन्यास सामाजिक एवम् सांस्कृति उपन्यास हो भन्नुमा त्यति अतियुक्ति हुने छैन । '... उपन्यास (थत्थामा) व्यवहारिक ढाँचाको यथार्थताका उपर सुधारात्मक उपायको उद्घोषक त हो नै; यद्यपि थाहै नदिई सरलतापूर्वक मान्य वादहरूको उद्घोष' (थाम्सुहाङ्, २०५७: ५९) थत्थामा उपन्यासले गरेको निष्कर्ष पुष्प सुब्बा थाम्सुहाङ्को विश्लेषण रहेको छ। हालसम्मका लिम्बु भाषाका उपन्यासहरू निम्नअनुसार रहेका छन्ः

| उपन्यासकार | उपन्यासहरू |
|---|---|
| • उत्तरकुमार यङहाङ् | लोजि (वि.सं. २०६२) |
| • थाकुहाङ् मेरिङ | नाम्भेराबा ताक्पेन (वि.सं. २०६३) |
| • पदमसिंह मुरिङ्ला | थत्थामा (१९८३ ई.) |
| • मणिराज हुक्पा | फुङ्बोनाइ (१९८५ ई.) |
| • सतकुमार सिङ्धाब | हिङ्मेल्ले ताङ्बा लाम्दिके(१९८७ ई.) |
| • ललित मुरिङ्ला | मिम् इप्लेखे (१९८८ ई.) |
| • देवमान लिम्बु 'होन्दोक' | साक्म्रा (१९८९ ई.) |
| • देवमान याक्थुङ् 'होन्दोक' | थेत्लङ (१९९१ ई.) |
| • बी.बी. पक्खिम | चोसाप्लुङ्मा (१९९१ ई.) |
| • देवमान याक्थुङ् 'होन्दोक' | लेप्मि (१९९५ ई.) |
| • रूपलाल खाम्धाक | **निङवासोरत** (२००५ ई.) |
| • नवल फाइबाली | **नानु? खदेम्** (वि.सं.२०६९) |
| • ................... | सेप्माङ् (१९८४ ई.?) |

लिम्बु उपन्यासहरु प्रायः सामाजिक परिवेशमा परिक्रमित रहेका छन्। यसो भए पनि ती उपन्यासहरुमा सामाजिक यर्थाथवादी, मनोविश्लेषणवादी, प्रगतिवादी धाराका विशेषताहरु पर्याप्त मात्रामा रहेको पाइन्छ।

## आधुनिक लिम्बु निवन्ध र तिनका विशेषताहरु

लिम्बु भाषामा पुस्तकका रुपमा प्रकाशित निबन्ध सङ्ग्रहहरु निम्नअनुसार रहेका छन्ः

| निबन्धकार | निबन्ध सङ्ग्रहहरु |
|---|---|
| ● एस.आर. खजुम | सुम्-इत्छाप् (१९९५ ई.) |
| ● बिर्ख पेघा (सम्पादक) | याक्थुङ् साप्पान् नु साप्शक(२००८ ई.) |
| ● कोल्भिङ लावती | सुम इत्छि (१९९५ ई.?) |
| ● उत्तमकुमार यङहाङ् | तङहुप्ला सुम (वि.सं. २०६२) |
| ● हर्क खाम्धाक | चभत्लुङ्मा (जुलाई, २००९) |
| ● अमर तुम्याहाङ् (सम्पादक) | याक्थुङ् सुम्जो (वि.सं. २०६९) |
| ● अमर तुम्याहाङ् (सम्पादक) | निङ्बङ्वा निङ्वाहा? (अ.प्र.) |

एस्.आर्. खजुम, बिर्ख पेघा, कोल्भिङ लावतीका निबन्धहरु वस्तुपरक निबन्धहरु हुन् । याक्थुङ् सुम्जो, निङ्बङ्वा निङ्वाहा? निबन्ध सङ्ग्रहमा केही आत्मपरक निबन्धहरु समावेश छन् । यात्रा संस्मरण कोटी निबन्धकारका रुपमा येहाङ् लाओती, इमाहाङ् सेत्लिङ्का निबन्धहरु पर्दछन् भने हास्यव्यङ्ग्यात्मक प्रवृतिका निबन्धहरु बुधि लेक्वाहाङ् खाम्धाक र निशेष आङ्देम्बेले लेखेका छन्।

## टुङ्ग्याउनी

लिम्बु भाषामा प्रायः सबै विधामा कृतिहरु प्रकाशित भएका पाइन्छन्। तर अझै पनि अपेक्षित रुपमा तिनको व्यवस्थित इतिहास लेखन, विधागत विश्लेषण, समालोचना हुन सकेको छैन। ❑

अध्याय-५

# लिम्बु साहित्यका थप सन्दर्भहरू

## ५.१ परिचय

लिम्बु साहित्यको कालभिजनमा नपरेका केही विधाहरू, लिम्बु भाषा, कोश, पत्रकारिता, गीत, सङ्गीत, आमसञ्चारमा लिम्बु भाषाको प्रसारण, समाजशास्त्रीय र मानवशास्त्रीय अध्ययन आदि विभिन्न विषयहरूको चर्चा यस खण्डमा गरिएको छ ।

## ५.२ बालसाहित्य

लिम्बु या याक्थुङ् साहित्य सागरमा बालसाहित्यले पनि आफ्नो स्थान राम्ररी नै ओगटिसकेको छ । लिम्बु भाषामा प्रकाशित बालसाहित्यका पुस्तकहरूमा १. **माङ्गे़न्ना?रे़ कुबोःक्** खन्ड-१ (कथा सङ्ग्रह मुन्धुम्सँग सम्बन्धित), २. **आनि? चोवासाम्बाहा?** खन्ड-२ (जीवनी सङ्ग्रह १० जनाको) ३. **केलाःङ्** खन्ड-३ (अमर तुम्याहाङ् र अन्य वि.स. २०६२) तीनोटैको पाठ्यक्रम विकास केन्द्र, सानोठिमी, भक्तपुरले प्रकाशनमा ल्याएको छ । अमर तुम्याहाङ्को **से़वारो** (बालकविता सङ्ग्रह २०५८) पनि प्रकाशित रहेको छ । यसरी नै भवानी तावाको लाबे पम्बम् (वि.सं. २०६७) बालकविता सङ्ग्रह प्रकाशनमा आएको छ ।

## ५.३ मातृभाषामा शिक्षा/पाठ्यपुस्तक/पाठ्यसामग्री

लिम्बु भाषामा औपचारिक मातृभाषा शिक्षाको इतिहास करिब आधा शताब्दी (सिक्किममा सन् १९६८ मा लिम्बु भाषामा प्राथमिक विद्यालयमहरूमा पाठनपाठन सुरू भएपछि) अगाडिसम्म पुग्दछ । पहिलो जनआन्दोलन सन् १९९० पछि नेपालमा लिम्बु भाषाले प्राथमिक तहमा शिक्षाको माध्यम बन्ने अवसर पायो । उता सिक्किममा महाविद्यालय स्तरसम्मको अध्यापनमा यो मातृभाषाले

स्थान पाएको छ भने यता नेपालमा प्राथमिक तह कक्षा ५ सम्म (स.२०५५ देखि स. २०५९ सम्म पूरा) अध्यापन भइरहेको छ ।

यहाँ औपचारिक तथा अनौपचारिक शिक्षामा लागू भएका र पढिने याक्थुङ् पाःन्का पुस्तकहरूको केही सूची प्रस्तुत गरएको छ । ती यस प्रकार छन्– १. **आनि? पाःन्** (कक्षा १) (रण मेन्याङ्बो, डिल्ली लिङ्दम् र अन्य स.२०५५), २. **आनि? पाःन्** (कक्षा २), ३. **आनि पाःन्** (कक्षा ३), ४. **आनि? पाःन्** (कक्षा ४), ५. **आनि? पाःन्** (कक्षा ५), ६. **तरःङ्** (अनौपचारिक शिक्षा), ७. **चोःत्लुङ्** (अनौचपारिक शिक्षा), ८. **आनि? चोवासाम्बाहा?** (जीवनी, सम्पा. अमर तुम्याहाङ् स.२०६३), ९. **के लाःङ्** (संस्कृति र कविता, सम्पा. अमर तुम्याहाङ् र अन्य २०६३), १०. **माङ्गे़न्ना?रे़ कुबोःक्** (कथा सङ्ग्रह, सम्पा. अमर तुम्याहाङ् २०६३), ११. **सामाजिक शिक्षा** (कक्षा १, अनुः अमर तुम्याहाङ् २०६३), १२. **गणित शिक्षा** (कक्षा १, अनुः अमर तुम्याहाङ् २०६३), १३. **विज्ञान, शारीरिक शिक्षा** (कक्षा १, अनुः अमर तुम्याहाङ् २०६३), १४. **पहाडी बोलीचाली** (किराँती–याक्थुङ् र किराँती – किरावा उदाहरण समावेश; अन्जु खड्का, केशरजङ्ग मगर र डा. विद्यानाथ कोइराला स.२०६३), १५. **प्रारम्भिक किरात वर्णमाला** (सङ्गीता थे़बे?, साम्जिरी सेमी र माङ्मिङसोहाङ् स.२०६०), १६. **सिक्कुम् फोना** (लक् थिक् बी.बी. मुरिङ्ला, सिक्किम), १७. **सिक्कुम फोना** (लक् नेत्छि बी.बी. मुरिङ्ला, सिक्किम), १८. **याक्थुङ् हुसिङ् लाम्** (बी.बी. मुरिङ्ला, सिक्किम), १९. **याक्थुङ् साप्पक्** (लक् थिक् बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २०. **याक्थुङ् साप्पक्** (लक् नेत्छि बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २१. **याक्थुङ् साप्पक्** (लक् सुम्सी बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २२. **खेदा?सुङ्** (लक् थिक् बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २३. **खेदासुङ्** (लक् नेत्छी बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २४. **पात्तिल्ला साप्पक्** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २५. **पात्तिल्ला सुङ** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २६. **साम्मिला साप्पक्** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २७. **सामिल्ला साप्पक्** (बी.बी. मुरिङ्ला र मोहन

फुरूम्बो, सिक्किम), २८. **चक्खेदा?** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), २९. **सिवादिङ् खाहुन्हा?** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३०. **याक्थुङ् साप्सक्** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३१. **याक्थुङ् साप्सक् फोना** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३२. **सिरिजङगा साप्सक्** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३३. **खेदाय खेदा** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३४. **याक्थुङ् सम्हेक्** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३५. **साप्पान्ले कुहु** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३६. **सिक्कुम् फोना**(बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३७. **सोधुङ्गेम्बाहा?रे** (बी.बी. मुरिङ्ला र मोहन फुरूम्बो, सिक्किम), ३८. **याक्थुङ् हु?आसि** (बी.बी. मुरिङ्ला र पिएस मुरिङ्ला, सिक्किम), ३९. **लिम्बु अक्षर गाइड**(अग्यात, सिक्किम), ४०. **लिम्बु वर्णमाला** (दिलेन्द्र कुरूम्बाङ-सुब्बा २००४ ई.), **लिम्बु लेसन्ज् इन् क्युरिअस ट्रान्स्क्रीप्सन मेन्ट टु सर्भ याज अ गाइड टु पिस कोर भोलुन्टिअर्ज् वोर्किङ इन् लिम्बुवान** (यु.एस्. पिसकोर मि.न.) आदि । यी पाठ्यपुस्तक र लेखकहरूको सन्दर्भसूचीमा सबै नसमेटिएको पनि हुन सक्ने सम्भावनालाई नाकार्न सकिन्न ।

## ५.४ शब्दकोश/शब्दावली तथा अध्ययन

लिम्बु भाषाको कोश निर्माणमा धेरै स्वदेशी र विदेशी विद्वान्हरूले योगद्यान पुऱ्याएका छन् । लिम्बु भाषाले अन्य मातृभाषाले जस्तै राज्यको दमनको जाँतोमा पिसिनु नपरेको होइन । तर पनि लिम्बु समाजका अगुवा विद्वान्हरूको प्रभावमा सिक्किम र नेपाल दुवै मुलुकबाट कतिपय अवस्थामा राज्यको केही सहानुभूति बटुल्ने काम पनि नभएका होइनन् । नेपालको सन्दर्भमा इमानसिं चेम्जोङ्, रणधीर सुब्बा, जी.बी. याक्थुम्बा, वैरागी काइँलाको अगुवाइमा राज्यस्तरबाट यस क्षेत्रमा केही काम गराउन सफलता प्राप्त भएको इतिहास पनि नभएको होइन् । यस किसिमको प्रयास सिक्किमको हकमा पनि प्रसस्तै भए । यस्तो प्रयासले लिम्बु भषा या **याक्थुङ् पाःन्**लाई संस्थागत गरायो । शब्द सङ्लन वा कोश निर्माणमा स्वभाषी लिम्बुहरूले पनि प्रयाप्तै प्रयासहरु गरे ।

यिनै प्रयासका परिणाम स्वरूप केही शब्दावली/शब्दकोशहरु तयार गर्ने, प्रकाशित गर्ने र अध्ययन गर्ने कार्यहरु भए । यसको केही झलक यहाँ प्रस्तुत गरिएको छः १. 'लिम्बु शब्दावली' (डब्ल्यू. जे. कर्कप्याट्रिक २००७: २४९-२५२ प्रथम संस्करन १८११), २. **लिम्बु-अङ्ग्रेजी शब्दकोश**(चार्लस् केम्बेल १९ औँ शताब्दीको मध्यकालमा), ३. **अ भ्योक्याब्युलरी अव् द लिम्बू ल्याङ्गुइज्** (एच्. डब्ल्यु. आर्. सेनिओर ई. १९०८ दास्रो संस्करण ई. १९७७), ४. **लिम्बु हिज्जे शब्दकोश** (दिलेन्द्र कुरूम्बाङ-सुब्बा वि.स. २०६२), ५. **लिम्बु-नेपाली-अङ्ग्रेजी शब्दकोश** (इमानसिंह चेम्जोङ् स. २०१८), ६. **लिम्बु-इङ्लिस् डिक्स्नरी अव् द मेवाखोला डायलेक्ट विथ इङ्लिस्-लिम्बु इन्डेक्स्** (बोइड मिखाइलोभ्सी ई.२००२), ७. **हिन्दी-लिम्बु शब्दकोश** (बज्रविहारी कुमार, पी. एस्. सुब्बा र बी.बी. सुब्बा ई.१९८०), ८. **'लिम्बु नेपाली इङ्लिस् डिक्सनरीः हिस्ट्री यान्ड् च्यालेन्जिज्'** (वैरागी काइँला ई.१९९८), ९. **लिम्बु-नेपाली-अङ्ग्रेजी शब्दकोश** (बी.बी. मुरिङ्ला), १०. **नेपाली-लिम्बु-अङ्ग्रेजी शब्दकोश** (हस्तलाल लिम्बु स.२०५१), ११. 'लिपि खोज्दै लाहुरे', कान्तिपुर, ४ वैशाख ०६२ बाट; तर हस्तलाल सावादेन (स.२०४९) को **नेपाली-लिम्बु-अङ्ग्रेजी शब्दकोश** भनी उल्लेख भएको, १२. **लिम्बु-नेपाली-अङ्ग्रेजी शब्दकोश** (बी.बी. सुब्बा ई.१९८०), १३. **सिरिजङ्गा लिपिमा केही शब्द** (हरि चङबाङ स.२०५०), १४. **लिम्बु शब्दकोश** (पान्डुलिपि, मणिशङ्कर सेरेङ-चोङ्बाङ्), १५. **लिम्बु-नेपाली शब्दकोश** (खेलराज यङहाङ् स. २०५२), १६. **संक्षिप्त खस-लिम्बु शब्दकोश** (नर बहादुर यङ्हाङ् स.२०५२), १७. **याक्थुङ् चो:क्थिम्** (ऋषिकुमार सङबाहाङ्पे <br>स.२०४९/ई.१९९२), १८. **लिम्बु-नेपाली (पर्यायवाची र विपरितार्थक) शब्दकोश** (तेजबहादुर फागो पन्धाक, २०६३), १९. **लिम्बु नेपाली प्रकृति मुजोक्लुङ्** (खगेन्द्रसिङ् आङ्बुहाङ्, वि.सं. २०३८), २०. **किरात पर्यायवाची शब्दहरु** (सेसेमि से-नाल्बो, वि.सं. २०५८), २१. **नेपाली-लिम्बु-लिम्बु शब्दकोश** (रणबहादुर मेन्याङ्बो र अन्य, वि.सं. २०६६) आदि ।

## ५.५ भाषा/व्याकरण

लिम्बु भाषा या याक्थुङ् पाःन्को व्याकरण अध्ययन तथा लेखनमा स्वदेशी तथा विदेशी विद्वान्हरूले समानान्तर किसिमले काम गरेको पाइन्छ । हालसम्म लेखिएका लिम्बु भाषाका व्याकरणहरु यसप्रकार रहेका छन्ः १. **द किरात (लिम्बु) ग्रामर** (इमानसिंह चेम्जोङ् ई. १९७०, **द किरात ग्रामर इन् लिम्बु ल्याङ्गुइज्** वा **किरात याक्थुङ् व्याकरण** वि. स. २०२७ कियाचुले स.२०५९ मा पुनःप्रकाशन गरेको), २. **कन्साइस् लिम्बु ग्रामर यान्ड् डिक्सनरी** (अल्फोन्स् वेइडर्ट र विक्रम सुब्बा ई. १९८५), ३. **अ ग्रामर अव् लिम्बु** (जर्ज भ्यान ड्रिम १९८७), ४. **याक्थुङ् हुप्पान् नु इछाप्** (लक् थिक् कक्षा ५-६ बी.बी. मुरिङ्ला), ५. **याक्थुङ् हुप्पान् नु इछाप्** (लक् थिक् कक्षा ७-८ बी.बी. मुरिङ्ला), ६. **थाङ्सिङ् हुप्पान् नु इछाप्** (लक् थिक् कक्षा ९-१२ बी.बी. मुरिङ्ला), **यक्क़ेन् ओधक्तिङ्बा आनिगे़ हुप्पान्**, लक्-१ र २ (सेर्मा साम्जिरी सेमि, वि.सं. २०६३) आदि।

## ५.६ अनुदित साहित्य

लिम्बु भाषामा अनुवाद कार्य पनि भएका छन् । मूलतः अङ्ग्रेजी, हिन्दी, खसनेपाली आदि भाषाबाट लिम्बु भाषामा अनुवाद गर्ने काम भएका छन् । यसरी नै लिम्बु भाषाबाट खसनेपाली र अङ्ग्रेजी भाषामा पनि अनुवाद गर्ने काम भएका छन् । यसका केही उदाहरणको लागि काइँला (वि.सं. २०६०ः १७-१८) बाट लिइएको तथ्य यहाँ प्रस्तुत छ- १. **गुलिभर्ऱे लाम्दिःक्** (जोनाथन स्विफ्ट, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), २. **चन्द्रसेखर आजाद** (अज्ञात अनु. बी.बी. मुरिङ्ला, सिक्किम), ३. **जवाहरलाल नेहरूऱे खे़दा?** (चित्रकथा, अज्ञात अनु. बी.बी. मुरिङ्ला, सिक्किम), ४. **देशवन्धु चित्तरन्जन दास** (चित्रकथा, अज्ञात अनु. बी.बी. मुरिङ्ला, सिक्किम), ५. **याम्धुम्बाऱे लागि ताम्सिङ्वा** (स्वास्थ्य र खेलकुद, अज्ञात अनु. बी.बी. मुरिङ्ला, सिक्किम), ६. **आनि? नु आनि? सयङ्** (सामाजिक शिक्षा, अज्ञात अनु. बी.बी. मुरिङ्ला, सिक्किम), ७. **काक्वाऱे याङ्घन्** (कृषिः आलु खेती, अज्ञात अनु. बी.बी. मुरिङ्ला, सिक्किम), ८. **च्वाः याङ्निःम्ले़ कुबि?** (सामाजिक शिक्षाः जलस्रोत, अज्ञात अनु. बी.बी.

मुरिङ्ला, सिक्किम), ९. **सक्वा हिङ्मा** (कृषिः मौरीपालन, अग्यात अनु. बी.बी. मुरिङ्ला, सिक्किम), १०. **सेरिम्ले़ याङ्घन्** (सुन्तलाको खेती, अज्ञात अनु. अग्यात, सिक्किम), ११. **लाजे? पोबे़न् थिम्बे** (शिक्षा विभाग, सिक्किम सरकार, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), **अम्दु तुक्मा** (स्वास्थ्य विभाग, सिक्किम सरकार, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), १२. **तुक्मारे लाम्** (अज्ञात, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), १३. **फन् नु अदङ्** (अज्ञात, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), १४. **फार्साङ्ङिन् याम्धुम्ले़ लागि नुबा मे़न्** (अज्ञात, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), १५. **सुखिम सुबे़ल्ला साक्लाम् के़बोङ्बा खल्ले़ङ्वाबे़न्** (अज्ञात, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), १६. **सेवान् सक्मा** (अज्ञात, अनु. बी.बी. मुरिङ्ला, सिक्किम), १७. **प्राथमिक शिक्षा पाठ्यक्र-२०४९** (दिलेन्द्र कुरूम्बाङ-सुब्बा अनु. स.२०४९, २०५४), १८. **पिपल पुस्तक सिरिज** (पूर्ववत् अनु. स. २०५८), १९. **मानव अधिकारको विश्वव्यापी घोषणा** (बालकृष्ण माबुहाङ्, वि.सं.२०४८; अमर तुम्याहाङ् अनु. स. २०५९), **संयुक्त राष्ट्र सङ्घको आदिवासीहरूको अधिकारसम्बन्धी मस्यौदा घोषणापत्र** (पूर्ववत् अनु. सं. २०५९), **आदिवासी जनजाति लिम्बुहरूको विकाससम्बन्धी एजेन्डा** (पूर्ववत् अनु. सं. २०६१) आदि ।

### ५.७ मौखिक लोककाव्य

मौखिक परम्परामा उच्चस्तरीय साहित्य भनेका **पालाम्**मा गाइने गीतहरु नै हुन् । यसमा **या?लाःङ्** (धान नाचमा युवायुवती भेला भएर गाइने दोहोरीजस्तै गीत), **हाक्पारे** (दैनिक जीवनका घटना वर्णन गर्दै दोहोरी वा एकोहोरी रूपमा गाइने), **तुम्याङ्हाङ् साम्लो** (विवाह वा मरौमा जेष्ठ नागरिकहरु भेला भएर गाइने), **मेरिङ् साम्लो** (शोक गीत), **ख्याली** (युवायुवतीहरूबीच परिचय आदनप्रदान तथा स्थापित सम्बन्ध मजबूत पार्नका लागि गाइने), **मिङ्वान् साम्लो** (न्वारन समारोहका दिन जेष्ठ नागरिकहरूले गाउने गीत), **मेक्काम् साम्लो** (लगनमा गाइने गीत), **थक्थाम्थाम् या हिम्काम्काम् साम्लो** (खरपैँचोमा गाइने साम्लो) आदि छन् ।

### ५.८ गीतिकाव्य

गीतिकाव्यमा भने विक्रम सुब्बा (सुम्निमा पारूहाङ्, वि.स. २०४५) नै झन्डै एक्ला जस्ता देखिएका छन् ।

### ५.९ गजलसङ्ग्रह

फुटकर गजलहरूको कुनै लेखाजोख छैन यद्यपि **वामिक् थुन्नु केद्येबि याम्मु** शीषर्कको गजल छापामा पाइएको हालसम्मको पहिलो गजल हो । कृति कै रूपमा पनि दुईवटा सङ्ग्रह प्रकाशित भइसकेका छन् । ती हुन्ः- १. प्रेमदीप थाम्सुहाङ्को **सुक्कुम्** (वि. सं. २०६१), निशेष आङ्देम्बेको **थाङबेन्** (वि. सं. २०६२) र राजकुमार तेयुङ्को **मेरिङ्गेन् मिक्वा** (वि. सं. २०५९) ।

### ५.१० जीवनकथा-आत्मकथा

जीवनी लेखन विधामा **इमानसिंह चेम्जोङ्को जीवनी** (के.के. लिम्बु १९७८ ई.), **लालसोर सेन्दाङ्को परिचयात्मक जीवनी** (रणबहादुर मेन्याङ्बो वि.स.२०६२), **मुहिगुम अङ्सीमाङ् फाल्गुनन्दः जीवन प्रसङ्ग, सत्य धर्म मुचुल्का र धर्मोपदेश** (सिकुम्दाङ् याक्थुङ्बा वि.स. २०६०), **साङग्राम्बा मनबहादुर लेक्वाहाङ् खाम्दाक** (पी.एस्. मुरिङ्ला, १९८३ ई.), **हस्तलाल साक्वादेनः आत्मकथा**, 'लिपि खोज्दै लाहुरे' (कान्तिपुर, ४ वैशाख ०६२ बाट), **पदमसिंह सुब्बा 'अपतन': व्यक्तित्व र कृतित्व** (विक्रम सुब्बा, अमर तुम्याहाङ्, इमाहाङ् सेत्लिङ् र विश्वासदीप तिगेला स. २०६२-), **सुब्बा हर्कजङ् मादेन स्मृतिग्रन्थ** (राजेश्वर थापा स.२०६२), **महात्मा सिरिजङ्गा सिङ्थेबे द ग्रेट सोसल अवेक्नर** (जे.आर. सुब्बा, २००४ ई.), **त्येअङ्सी सिरिजङ्गा सम्बन्धित सत्यकथाहरु** (ताम्लिङ् बीरबल लिम्बु, २००४ ई.) **त्येअङ्सी सिरिजङ्गा...** (आर.बी. याक्थुङ् चुम्, ...ई.), **चन्द्रकुमार सेर्मा जीवनयात्रा** (वि.सं. २०६६), **महागुरू फाल्गुनन्द** (प्रधान सम्पादकः दङ्धोज खोयाहाङ्, प्रकाशकः राष्ट्रिय प्रतिभा स्मारक कोष, नेपाल सरकार तथा महागुरू फाल्गुनन्द स्मृति प्रतिष्ठान, वि.सं. २०६६), **त्येअङ्सी सिरिजङ्गा ३०१ औँ**

**जन्मजयन्ती र उनको पथमा हाम्रो यात्राः एक अवलोकन** (गोपीकृष्ण अधिकारी, तान्छोप्पा, वर्ष ९ अङ्क १३, पुस २०६१, पृ. ६), **हक्चुम्भो थक्सुबा बलबहादुर चेम्जोङ्** (स्व. स्वप्नील स्मृति, तान्छोप्पा वर्ष ११, अङ्क ५, जेठ २०६३, पृ. ७), **विक्रम सुब्बाको जीवनी, व्यक्तित्व र कृतित्व** (रमेश प्रसाद तिमल्सिना, वि.सं. २०६६, त्रि.वि.वि. एम्.ए. थिसिस्), इमानसिंह चेम्जोङ्**को जीवनी, व्यक्तित्व र कृतित्व** (जानुका राई, नेपाली विभाग, वि.सं. २०६६, त्रि.वि.वि. एम्.ए. थिसिस्) आदि छन् । यसरी नै विश्वासदीप तिगेला (निर्माता), अमर तुम्याहाङ् (खोजकर्ता/प्रस्तोता), प्रणय लिम्बु (छायाङ्कन निर्देशन), एल्.बी. चेम्जोङ् (सह-निर्माता), सीताराम आङ्देम्बे र नन्दा चेम्जोङ् (सहयोगी) र इमाहाङ् से़त्लिङ् र के.बी. लिम्बु (व्यवस्थापक) आदि रहेको **मृदुल पदम** (पी.एस्. मुरिङ्लाको साहित्यिक विरासतको खोजीमा) अडिओ-भिजुअल सी.डी. पनि उपलब्ध छ ।

## ५.११ नाटक

नाटकअन्तर्गत एकाङ्की, पूर्णाङ्की, गीति नाटक पर्द्यछन ।

**एकाङ्की नाटकः** एकाङ्की नाटकको विधामा पनि लिम्बु भाषामा कलम चलेको पाइएको छ । त्यसमा **'बलिङ्हाङ्'** (बी.बी. सुभा-मुरिङ्ला-नुगो, अनु. वैरागी काइँला स. २०५९ः १५४-१७३) नै हो । यसरी नै **चे़?या, खे़?सुङ** (लिम्बु अन्डरग्र्याजुयट् सिलेबस्, पृ. ५, २००८ ई.) छन् । एकाङ्की नाटक विधामा कलम चलाउने नाटकारमा नवीनकला आङ्देम्बे (**सनारूङ् कोःप्मानाइल्ले़ खोःम्मानाबा तनालुङ्ङिन्,** गोरखापत्र, २०६४, कात्तिक २१ गते) को नाम बिर्सन हुँदैन ।

**पूर्णाङ्की नाटकः** यो विधामा उत्तरकुमार यङहाङ्को ***से़प्माङ्ले़ कुसे़प्माङ्*** (स. २०६२) भेटिको छ । ***याम्नोःङ्*** (नाटककार लेखक सारदा सुब्बा, अनु. येहाङ् लाओती, स.२०५३) पूर्णाङ्की नाटक हो । यसरी नै अमर तुम्याहाङ् र डिल्ली लिङ्दमले सहलेखन रहेको पाँच दृष्य रहेको **मिसेक्ना** (तान्छोप्पा, वर्ष ७, अङ्क ५, जेठ २०५९ र तान्छोप्पा वर्ष ७, अङ्क ६, असार २०५९) पनि अर्को पूर्णाङ्की नाटक हो । स्वप्नील स्मृतिको सम्पादकत्वमा

नेपाल प्रज्ञा-प्रष्ठिानबाट प्रकाशित हुँदै आएको 'फक्ताङ्लुङ्' पत्रिकाको दोस्रो सङ्युक्त अङ्क २०६९।७० सङ्युक्त नाटक विशेषाङ्कको रूपमा प्रकाशित भएको छ । यसरी नै मलिसा याक्थुङ्बा लिम्बुले 'खामाक् पाङ्भे?ले़न् तुङ्हा?' नामक २०६८ मा पूर्णाङ्की नाटक सङ्ग्रह प्रकाशित गरेका छन् ।

**गीति नाटकः** लिम्बु युवायुवतीले प्रेम विवाह गरेको विषयलाई प्रस्तुत गर्दै तेज यक्सोद्वारा निर्देशित ***अम्लारी फुङ्*** ('सुनखरी फूल' (प्रेमको प्रतीकको रूपमा प्रेमिकालाई दिइने) २० जेठ ०६३ नेपाल प्रज्ञा-प्रतिष्ठानमा प्रदर्शन गरिएको थियो । यो गीतिनाटकमा मित्र लिङ्देन्, यासेली योङ्हाङ्, सिर्जना पन्दाकको मुख्य भूमिका रहेको छ । यसको कथा परिकल्पना प्रेम पन्दाक हुन् भने मुन्धुम् प्रस्तुति रैप्रसाद चोङ्बाङ्को र सङ्गीत अशोक राई (हेर्नू ***हिमाल खबरपत्रिका***, १६-३२ असार ०६३ः ८५, ***तान्छोप्पा***, ११, ५ः५) को हो ।

### ५.१२ समालोचना

लिम्बुसाहित्यमा भएका केही सामालोचनाहरू निम्नअनुसार छन्ः **लिम्बु भाषा-साहित्य र आजको लिम्बु कथा** (वैरागी काइँला, सयपत्री पूर्णाङ्क १९, २०६१), **किरात मिक्हन् साम्लो सिगाङ-साम्लोराङ्ङिल्ले़** (थाम्सुहाङ् पुष्प सुभा, तान्छोप्पा, वर्ष ८, अङ्क ८, साउन २०६०, पृ. ७/६) **याक्थुङ् खे़दा?रे़ कुबोरे़न् चुक्मुक्पा साप्मुन्धुम्** (वैरागी काइँला, तान्छोप्पा, वर्ष ८ अङ्क १०, असोज २०६०, पृ. ७), **नेप्पमाङ् ऐप्मा सात्ने़त्छि कर..** (पान्थरे लुङा, तान्छोप्पा, वर्ष ६ अङ्क ३ वैशाख, २०५८, पृ. १), **पोरोक्मी माङ्ले... ने़त्तिमु चोगु, कुभुङ्मु चोगु**, (पान्थरे लुङा, तान्छोप्पा, वर्ष ६ अङ्क ४ जेठ, २०५८, पृ.१), **याक्थुङ् पे़न्युक्खा मिङ्बा साप्लान् ओमे़प्मे़ल्ले** (अम्बर तुम्म्याङ, तान्छोप्पा वर्ष ६, अङ्क ८ कात्तिक २०५८, पृ. १/८), **हिन्जा? साम्मिला सुङ् सेवारोइन् ओमे़प्मे़ल्ले** (पान्थरे लुङा, तान्छोप्पा, वर्ष ६ अङ्क ९, पृ. १/७), **साम्बा डिल्लीरे़ कुनिङ्वा? से़ल्ले़ङ्ङो निदे़त्ते़बा 'मना चइःत्हा?'** (अमर तुम्याहाङ्, तान्छोप्पा, तान्छोप्पा वर्ष ७, अङ्क ४, वैशाख २०५९ पृ. १/७),

**'सोधुङ्ग़ेन् इमानसिङ् चोःत्लुङ्' मासाम्बे़इन् निरूङ्ङिल्ले** (इमाहाङ् सेत्लिङ्, तान्छोप्पा, वर्ष ९ अङ्क ५, जेठ २०६१, पृ. ७), **'थाङ्बे़न्' सुङ् नु याक्थुङ् गजलरे़न् याङ्दाङ्** (स्व. स्वप्नील स्मृति, तान्छोप्पा, वर्ष ११, अङ्क २, फागुन २०६२, पृ. ७) आदि रहेका छन् । यसरी नै मलिसा याक्थुङ्बा लिम्बुले **याक्थुङ् पान्दाङ् साप्सक्रे़न् निरे़ङ्** (२०१३ ई.) र पुष्प सुब्बा थाम्सुहाङको **याक्थुङ् साप्सकरेन पाङ्नाम मुक्सिहा?** (वि.सं. २०६९) समीक्षात्मक कृतिहरू प्रकाशित छन् । यी बाहेक भूमिका लेख्ने क्रममा वैरागी काइँला र पदमसिंह मुरिङ्लाले धेरै कृतिहरूको सविस्तार समालोचना गरेको पाइन्छन् ।

### ५.१३ हास्यव्यङ्ग्य

साहित्यको कुनै पनि विधाको बीज भाषाको प्राथमिक रूप बोल्यमा नै पाइन्छ । लिम्बु भाषामा पनि हास्यव्यङ्ग्य साहित्यको कुरा गर्दा त्यो लिम्बु भाषाको बोल्य रूपमा नै भएको कुरा **सोरे़क्** शब्दले जाहेर गर्दछ । सोरेक् शब्दले ख्याल ठट्टा गर्ने र अरूलाई आल्हादित बनाउने, प्रफुल्लित पार्ने, हँसाउने क्रियालाई बुझाउँदछ । मानिस सधैँ गम्भीर भएर रहन सक्दैन । त्यो गाम्भिर्यतालाई तोड्न हाँसीमजाक गर्ने गर्दछ । यसर्थ पनि हास्यव्यङ्ग्य भनेको मनोविनोदको सशक्त माध्यम हो ।

लिम्बु भाषा साहित्यमा हास्यव्यङ्ग्यको सन्दर्भको चर्चा गर्दा मुन्धुम्, लोककथा, लोकगीत या ख्याली, उक्ति, उखान, गाउँखाने कथा आदि लोकसाहित्यमा पाइन्छ साथै गद्य विधा, पद्य विधा, कार्टुन चित्र (काइँला, २०६२:१३) आदि आधुनिक लेख्य साहित्यमा पाइन्छ ।

लिम्बु हास्यव्यङ्ग्य साहित्य प्रबर्द्धनका लागि बुधि लेक्वाहाङ् खाम्धाक्को सम्पादनमा सचित्र पत्रिका सन् १९९७ देखि फाटफुट रूपमा प्रकाशन हुँदै आएको छ । यसरी नै बी.बी. मुरिङ्ला सम्पादित मिक्केःक्वा हवाइ पत्रिका, अमर तुम्याहाङ् सम्पादिन तान्छोप्पा र फुङलगायतमा पत्रिकाले पनि लिम्बु हास्यव्यङ्ग्य साहित्यको विकासका लागि वगैँचाको काम गरेका छन् । लिम्बु कार्टुन चित्रमा भने निरन्तर लागिरहने एकमात्र कलाकार लाभुन लिङ्दम् हुन् ।

